२०१४ साल आषाढ ९ गतेका दिन स्थापना भएको नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान सो समयदेखि नै साहित्य, संस्कृति, कला आदिको क्षेत्रमा कार्य गर्दै आएको छ । यसका जन्मदाता स्वनामधन्य स्वर्गीय **श्री ५ महेन्द्र**बाट हुकुम भएअनुसार यसको मूल उद्देश्य– 'देशको मौलिक परम्परालाई युगानुकूल बाटोमा अग्रसर गराउनु–' नै हो ।

**राष्ट्रनायक श्री ५ महाराजाधिराज वीरेन्द्रवीरविक्रम शाहदेव**का कृपापूर्ण संरक्षकत्वमा नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानले २०३१ साल वैशाख १ गतेदेखि नवीन व्यवस्थाअनुसार कार्य गर्न प्रारम्भ गरेको छ । यसअनुसार प्रज्ञा-प्रतिष्ठानको उद्देश्य तथा कार्यक्रम अधिक व्यापक तथा गंभीर तुल्याइएको छ ।

विविध विषयका आधिकारिक सृजनात्मक ग्रन्थको प्रकाशन, अनुसन्धानात्मक कार्य, नेपाली संस्कृतिका आधारभूत कुराहरूको खोजी तथा साहित्य, संगीत औ कलाका क्षेत्रमा राष्ट्रियताको विकास हुने कार्यको संचालनद्वारा यसले प्रगतिशील नेपाली राष्ट्रसुहाउँदो कार्य द्रुतता औ गंभीरताका साथ गर्ने चेष्टा गर्नेछ ।

देश-देशान्तरमा नेपाली राष्ट्रको गौरव तथा प्रगतिशीलताको सौरभ फिंजाउन प्रज्ञा-प्रतिष्ठानले सबैको सहयोग पाउने आशा गरेको छ ।

वैशाख २०३१.

सूर्यविक्रम ज्ञवाली
कुलपति
नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान

# मन्तव्य

कुनै पनि देशको लोक-गीत त्यो देशको आफ्नो अमूल्य धन हो । त्यसका संकलनले त्यस देशका समाज, संस्कृति इत्यादिबारे धेरै कुराको अनायासै बोध हुन्छ ।

नेपाल जत्रो भए पनि यसमा अनेक जातिहरू छन्, ती सबैको समुदायले नेपालको राष्ट्र निर्मित छ । सग्लो नेपालीको रूपमा रहेका सबै जातिहरूमा पारस्परिक मधुर सम्बन्ध भइराख्न प्रत्येक जातिको लोक-साहित्य प्रत्येक अन्य जातिले जान्न र हृदयंगम गर्न निक्कै आवश्यक ठान्दछु । यसै सिलसिलामा यो 'नेवारी लोक-गीत' को नेपाली रूपान्तर नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानबाट प्रकाशित भएको छ ।

यो उपयोगी वस्तुको संकलन गरी यसलाई नेपालीमा सरल र सुबोध अनुवाद गरिदिने श्री हरि श्रेष्ठलाई धन्यवाद छ ।

लोक-गीतमा अभिरुचि राख्ने सज्जनहरूलाई नेवारीमा भएका प्रतिनिधिस्वरूप केही लोक-गीतहरूको नेपाली भाषामा रसास्वादन दिन यस संकलनले सक्नेछ भन्ने कुरामा म विश्वस्त छु ।

प्रज्ञा-भवन
आश्विन १५, २०३१

**लैनसिंह बाङ्देल**
उप-कुलपति

# भूमिका

गोर्खालीहरूको बहादुरी, नेवारहरूको कला तथा किरातीहरूको प्राचीन गौरवका साथै अन्य विभिन्न जातिको बिभिन्न आचार-विचार, रहन-सहन, भाषा, संस्कृति, धर्म, बिश्वास तथा सभ्यताको संमिश्रण र समन्वयबाट नै नेपाली संस्कृति, नेपाली भाषा, नेपाली सभ्यता तथा नेपालित्वको निर्माण भएको तथ्यमा नेपाली इतिहास तथा संस्कृतिका अध्येताहरूबीच मत-मतान्तर छैन। वास्तवमा साझा राष्ट्रिय नेपाली लोक-संस्कृतिको निर्माणको क्रममा वर्तमान नेपाल अधिराज्यका सरहदभित्र बसोबास गर्ने विभिन्न स्थान र जातिको स्थानीय तथा जातीय लोक-साहित्य तथा संस्कृतिको आपस्तको लेनदेन महत्त्वपूर्ण छ। यिनीहरूबीचको लोक-सांस्कृतिक तथा साहित्यिक आदान-प्रदान र पारस्परिक प्रसारले हाम्रो साझा राष्ट्रियता, जातीयतालाई अरू सबल तुल्याउन मद्दत हुनेछ। यस क्रममा नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान आफ्नो योजनानुरूप पहिलो पल्ट केही नेवारी लोक-गीतहरूको भाषान्तर राष्ट्रभाषा नेपालीमा प्रस्तुत गरिरहेछ।

संसारको प्रत्येक जाति तथा राष्ट्रको जीवनमा लोक-संस्कृति, लोक-साहित्य, लोक-गीत, लोक-कला आदिको महत्त्वपूर्ण भूमिका हुन्छ। लोक-साहित्य लोक-संस्कृतिको वाहक मानिन्छ।

लोकले अनुभूत गरेका जीवनका तीता-मीठा अनुभव, अनुभूति तथा परिस्थितिअनुकूल प्रतिकूल प्रतिक्रिया, दुःख-सुख, हर्ष र बिस्मात सबै जीवित परंपरा लोक-साहित्यमा अकृत्रिम रूपमा प्राप्त हुन्छन् । लोक-साहित्यमा पनि लोक-गीतको स्थान प्रचार र प्रसारको व्यापकता तथा लोकप्रियताले विशेष उल्लेखनीय रहन्छ । किनभने लोक-साहित्य या लोक-संस्कृति कुनै पनि राष्ट्र तथा देशको परंपरागत अलिखित मौखिक परिचय तथा स्वप्रकाशित मौलिक आत्मा हो भने लोक-गीत त्यसैको मुटुको आन्तरिक ढुकढुकी हो । लोक-काव्यमा व्यक्तिको भन्दा समूह तथा जातिको तीव्र भाव अभिव्यक्त हुन्छ । लोक-गीतको उत्पत्तिमा व्यक्तिविशेषको हात केही रहे पनि लोक-गीत सामूहिक रचनाको रूपमा बढी स्वीकृत छ । अतः एक पुस्तादेखि अर्को पुस्तासम्म सन्तान-दरसन्तान मौखिक रूपमा लोकको आत्मकहानी लयात्मक रूपमा अंकित भएको लोक-गीतमा लोकको सामाजिक धार्मिक सांस्कृतिक मूल्य, रीतिरिवाज, विश्वास, सदाचार तथा प्रचलनसम्बन्धी अत्यधिक महत्त्वपूर्ण सामग्रीहरू प्राप्य छन् । स्पष्ट भन्ने हो भने लोक-गीतको माध्यमबाट केही हद-सम्म स्थानीय इतिहास तथा भूगोलको समेत ज्ञान हासिल गर्न सकिन्छ । यसरी लोक-गीतको महत्त्व केवल, संगीत र साहित्यमा मात्र सीमित छैन । लोक-गीत साहित्य तथा संगीतको दृष्टिकोणले भन्दा लोक-सांस्कृतिक दृष्टिकोणले बढी गह्रुङ्गो र महत्त्वपूर्ण छ । त्यसैले लोक-गीतको संकलन, अध्ययन तथा विश्लेषण ऐतिहासिक, भौगोलिक, सामाजिक, धार्मिक तथा मनोवैज्ञानिक पृष्ठभूमिमा हुन आवश्यक छ ।

प्रस्तुत पुस्तक 'नेवारी लोकगीत' मा नेवारी भाषाका लोकप्रिय तथा प्रसिद्ध लोक-गीतहरूको भाषान्तर मात्र प्रस्तुत गरिएको छैन; अनूदित गीतहरूलाई मोटा-मोटी रूपमा भए पनि वर्गीकृत गरी तिनीहरूको सामाजिक, ऐतिहासिक तथा सांस्कृतिक

पृष्ठभूमि समेत उल्लेख गर्ने जमर्को गरिएको छ । नेवारी लोक-संस्कृति तथा लोक-साहित्यमा रुचि राख्ने अन्य भाषा-भाषी विद्वान्हरूलाई उपर्युक्त परिप्रेक्ष्यमा हृदयंगम तथा विश्लेषण गर्न परिशिष्टमा दिइएको गीतमा प्रयुक्त हुने वाद्य-परिचय, र केही शब्द-विवेचनाले अवश्यमेव सघाउ पुऱ्याउनेछ ।

लोक-गीतहरूको अन्त्यमा उल्लेख भएका राजाहरूको नामावलीअनुसार १५५० देखि १९५५ ई० संवत्भित्रका करीब ५०० वर्षअघिसम्मका मल्लकालीन र शाहकालीन लोक-गीत र लोकगाथाहरू यस पुस्तकमा समाविष्ट छन् । समाविष्ट लोक-गीतहरू सामाजिकता तथा ऐतिहासिकताको दृष्टिले विशेष उल्लेखनीय र महत्त्वपूर्ण छन् । यो लोक-गीतहरूमध्ये कतिको त हाम्रो राष्ट्रिय इतिहासको कोटिक्रमसँग सम्बन्ध पनि देखिन्छ ।

सामयिक तथा सामान्य भजनअन्तर्गतका अन्य लोक-गीतहरूले नेवारी समाजमा प्रचलित देव-देवता र उनीहरूसँगको लोकको संबन्ध तथा विभिन्न उत्सव, चाड-पर्व जात्रामा, गाइने र बजाइने गीत एवं वाद्यधुनले खास ऋतु तथा समयको आगमनको अग्रिम सूचना दिने मनोरम परंपराको सुन्दर परिचय दिन्छ भने सामान्य सामाजिक लोक-गीतहरूमा लोकले समय-समयमा अनुभूत गरेको सामाजिक पीडा तथा उमंग र उल्लासहरू यथावत् जीवित छन् । 'ख्याली' लोक-गीतहरूमा केवल हाँसखेल ठट्टा तथा तरुण हृदयको जिस्का-जिस्की मात्र नभएर सामाजिक व्यंग्य र सुधारको भावना समेत अन्तर्निहित पाइन्छ । यसै गरी वाल-लोकगीत-हरू पनि केवल बाल-बालिका भुल्याउने या फुल्याउने मात्र नभएर तिनीहरूमा सामान्य ज्ञानको संचार गर्ने साधन बनेका छन् । सही अर्थमा यी बाल-लोकगीतहरूको समाजिक उपादेयता देखिन्छ । किनभने तिनीहरूमा भविष्यमा गएर बालकले कस्तो नागरिक बन्नुपर्ने तिनको संकेत एवं दिग्दर्शन पाइन्छ ।

अन्तमा नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानले सुम्पेको अभिभारालाई सफलतापूर्वक संपन्न गरी समय-समयमा आवश्यक सर-सल्लाह तथा सुझावहरू सहृदयतापूर्वक ग्रहण गरी भाषानुवाद मात्र नगरी आवश्यक क्रम मिलाउन, विभाजन गर्न र प्राचीन शब्दहरूको सही अर्थ लगाउन खोज-अनुसंधान समेत गरी हाम्रो लक्ष्य-प्राप्तिमा महत्त्वपूर्ण योगदान गर्नुहुने श्री हरि श्रेष्ठज्यूलाई विशेष धन्यवाद-ज्ञापन गर्दछु ।

२०३१
कमलादी, काठमाडौं ।

तुलसी दिवस
सदस्य
नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान

# केही कुरा

जन-जीवनमा लोक-संस्कृतिले ठूलो स्थान लिइरहेको हुन्छ । युग-युगदेखि मानिसले आफ्ना सुख-दुःखका घटनाहरू संवेदनाका आँसुहरू लोक-संस्कृति अथवा लोक-गीतमा जीवित छोडेका हुन्छन् । प्रस्तुत लोक-गीत अथवा जनप्रिय गीतले नेवारी समाजको आफ्नो सुख दुःखका घटनाहरूसँग सम्वन्ध राख्दै सुखका उद्गार एवं दुःखका क्रन्दन तथा छटपटी व्यक्त गरेका छन्, विशेष गरी यी गीतहरू ती समुदायसँग प्रायः ज्यादै सम्बन्धित छन्; जो दिनभरि कृषिकार्यमा लागी साँझपख घर फर्कन्छन् र परिश्रमले थाकेका आफ्ना क्लान्त शरीरमा आमोद-प्रमोदद्वारा पुनः स्फूर्ति ल्याउन प्रयास गर्छन् । यसैले यस समाजमा सुख-दुःखका गीतहरू भरमार छन् । लोक-गीत जनताको हृदयसँग स्पर्श गर्दै बौद्धिक, शाब्दिक अलंकारको कृत्रिमताबाट टाढा रही वास्तविकता तथा स्वाभाविकतालाई अँगाल्दै अगाडि बढ्छन् । अनि यही लोक-गीत गाएर अथवा कथेर मानिसले आफ्नो दुःख भुल्ने प्रयास गर्छन् र पीडित हृदय तथा थकित मस्तिष्कले एक छिन भए पनि सुखको अनुभव गर्न थाल्छन् ।

लोक-गीतमा वेदना बोलेको हुन्छ र सुख गाँसेको हुन्छ । अनि लोक-गीतले समयको अतिरिक्त समाजको पनि प्रतिनिधित्व गरेको हुन्छ, यसको साथै लोक-गीतको भाषामा स्वभावतः मिठास हुन्छ, वास्तविकता हुन्छ र जन-हृदयलाई सहजै स्पर्श गर्न सक्ने लोक-गीतको स्वभावजन्य गुण हुन्छ । यसमा बौद्धिक कलाको चमत्कार हुँदैन । तर प्रकृति हुन्छ, आत्मा हुन्छ । त्यसैले कुनै पनि लोक-गीत त्यही समाज अथवा त्यही भाषाको निमित्त प्रिय हुन्छ । जब त्यसलाई अर्को भाषामा लैजाने प्रयास गरिन्छ, ती स्वभावजन्य गुणहरू एकाएक मेटिएर जान्छन् र कुनै अप्राकृतिक वस्तुको सिर्जना भएझैं मानिसलाई लाग्न थाल्छ, जतिकै प्रयत्न गरिए तापनि गीतको मिठास स्वतः मेटिएर जान्छ । यसका अतिरिक्त हस्तलिखित गीतहरू समयको क्रममा उतार्दै ल्याइंदा गीतमा एकरूपता नआई त्रुटि थपघट, तथा अस्पष्ट हुनुको अतिरिक्त लोप हुँदै गई अप्रचलित भइसकेका शब्दको अर्थ लाग्न भाषान्तरमा स्वभावतः कठिन हुन आउँछ । यसैको कारण यहाँ पनि कतै भावलाई मात्र अँगाली, कतै ठीक अनुवादमा प्रवाहित हुँदै अथवा कतै अन्त्यानुप्रासमा जोड दिई अगाडि बढ्नुपरेको छ । यसको कारण अनुवादमा आइपर्ने विभिन्न समस्यालाई संकेत गर्न सकिन्छ ।

यसैले यस संकलनका गीतहरू नेवारीमा जुन लय र मिठासमा गाइन्छन्, त्यही लय र मिठासमा नेपालीमा गाइन सकिन्छ भन्न भाषान्तरको कारणले गर्दा सकिन्न । यस संकलनमा अस्पष्ट क्लिष्ट अप्रचलित करीब ५०० वर्ष अथवा यसभन्दा पनि पुराना गीत रहेका छन् । कुनै कुनै परम्परागत गीतमा नयाँ राजाको नामका साथ अन्य पंक्ति पनि भित्र्याई नवीकरण गर्न खोजिएको देखिन्छ । अस्पष्ट र संदिग्ध शब्दलाई प्रश्नचिह्न दिई वा कोष्ठभित्र पारी गीतको पृष्ठभूमि, गीतमा प्रयोग हुने बाजा तथा केही शब्दको विवेचना पनि परिशिष्ट खण्डमा दिइएको छ ।

मेरो विचारमा स्वाभाविक भाव-चित्रण गर्न उतिकै सरल

तथा आकर्षक पर्यायवाची शब्दको अप्राप्ति तथा समाजको रहन-सहनको भिन्नता अथवा लेखकको कमजोरीको कारणले भाषान्तरमा बौद्धिक कला अवश्य घुस्छ र लोक-गीत अप्राकृतिक बन्छ । त्यसैले कुनै पनि लोक-गीत अर्को भाषामा लैजान खोज्दा शायद लोक-गीतको भित्री आत्मालाई नै चोट पुऱ्याउनु हुन्छ । तर भाषान्तरमा ल्याउँदा यी विभिन्न समस्या भए तापनि लोक-गीतलाई कुनै भाषाको सीमित परिधिभित्र राखिछोड्नु उचित होइन । कुनै पनि समाजको सुख-दुःखमा एक-अर्काले सहानुभूति प्रकट गर्ने समय पनि आएको छ । कला, संस्कृतिको आदान-प्रदान गरी विश्वमा एक नयाँ भावनाको सृजना गर्ने वेला पनि आइसकेको छ । त्यसैले यस अवस्थामा कुनै पनि समाजका लोक-गीतका सुख-दुःखका घटनाहरू एक-अर्काले अवश्य बुझ्ने प्रयास गर्नुपर्छ र कुनै पनि मानव-मस्तिष्कले आफ्नै जातीय लोक-संस्कृतिमा मात्र रम्न छोडेर अरू जातीय संस्कृतिमा पनि अभिरुचि लिई पारस्परिक ज्ञानको आदान-प्रदानद्वारा मानव-जीवनको नयाँ अनुभूति गर्नुपर्ने वेला आइसकेको छ । यसैको सन्दर्भमा नेवारी लोक-गीतको प्रस्तुत भाषान्तर तयार भएको हो ।

नेवारी लोक-गीतलाई यहाँ दुई भागमा विभाजन गरिएको छ– एक सामयिक, अर्को सामान्य । सामयिक लोक-गीतहरू विशेष पर्व अथवा ऋतुकालीन भए, सामान्य लोक-गीत बाह्रै काल गाइन्छन् । 'सिंहको जगर समाई' आदि लोक-गीतहरू भजनमा गाइने भए तापनि सामान्य सामाजिक स्तंभमा रहेका छन्, त्यस्तै 'सुन हे श्री भैरबनाथ' आदि । यसका अतिरिक्त नृत्यनाथ महेश्वर भजन पुरानो रचना नभए तापनि तालको निम्ति यहाँ प्रस्तुत गरिएको छ । यत्तिकैमा आफ्नो देशभित्रका नेवारी लोक-गीतहरूको संकलन गर्नुको अतिरिक्त नेपालीमा भाषान्तर गर्ने तथा नेपाली जातिको राष्ट्रिय लोकसंस्कृतिका कृतिको वृद्धि गर्ने सुम्पिएको अभिभारालाई मैले पूर्ति गर्न सकेको छु भन्न सक्तिनँ । तर जे होस्– आफ्नो बुद्धि तथा परिश्रमको

अनुसार यो एउटा पत्रम् पुष्पम्को रूपमा अर्पण गर्दै राजकीय प्रज्ञा-प्रतिष्ठानप्रति आभारी प्रकट गर्छु। आशा छ— देशका अरू भाषाका लोक-गीतमा पनि प्रतिष्ठानले दृष्टि दिनेछ।

अन्तमा— भाषान्तरमा कुनै त्रुटि भए सुधारको निम्ति सुझावको आह्वान गर्दै लोक-गीतको भाषान्तर गर्न उत्साहित तुल्याउनुभएकोमा नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानका सदस्य श्री माधवप्रसाद घिमिरे, श्री तुलसी दिवसलाई तथा यसको लोक-गीत-विभाजन आदि कार्यमा सहयोग दिनुहुने श्री चित्तधर 'हृदय' र श्री प्रेमवहादुर कंसाकारका साथै अन्य मेरा सहयोगीहरूलाई पनि धन्यवाद अर्पण गर्न चाहन्छु।

१९–६–०३०

—हरि श्रेष्ठ

# मल्लकालीन केही लोक-गीत

## ( १५५०-१७७१ ई० )

१. श्री महीन्द्र मल्ल–

कपटी मायाले बाँध्यो हे शिव

२. श्री सदाशिव मल्ल–

श्री गुह्येश्वरी माता

३. श्री प्रताप मल्ल–

मोह गरिन् रे वाह रे वाह

४. श्री पार्थिवेन्द्र मल्ल–

सिंहको जगर समाई

म कहाँ गई भेटूँ (रानी राज्यलक्ष्मीदेवी)

५. श्री योगनरेन्द्र मल्ल–

प्रभु बिनु के छ उपाय (रानी नरेन्द्रलक्ष्मी)

६. श्री भूपालेन्द्र मल्ल–

राधिका कृष्णजीको अंग (रानी ऋद्धिलक्ष्मी)

७. श्री भास्कर मल्ल–

नारायणजी पर्वतछेउ

८. श्री भूपतीन्द्र मल्ल–

कसरी थाहा पाइनँ नारान

९. श्री जगज्जय मल्ल–

जय नृत्यनाथ

१०. श्री विष्णु मल्ल–

देवी दुधनमाई

११. श्री राज्यप्रकाश मल्ल–

बासुकि नवनाग

१२. श्री रणजित मल्ल–

हेर्ने वेला भयो गंगामाई

●

# शाहकालीन केही क्रमागत लोक-गीत

[१७६८-१९५५ ई०]

१. श्री ५ पृथिवीनारायण शाह–

मनकामना देवी

२. श्री ५ सिंहप्रताप शाह–

पिरतीको पुरुषले छाडी गए

हरि हरि मेरो हृदय

३. श्री ५ रणबहादुर शाह–

नछेक्नुस् मलाई, जाऔं रोपाइँ गर्न

मंगल गरे श्री भीमराज

श्री करुणामय ल्याएको हेर

थाहा पाएछन् सबैले

४. श्री ५ गीर्वाणयुद्धविक्रम शाह–

जय श्री वासुकि नागराजा

५. श्री ५ राजेन्द्रविक्रम शाह–

आए श्री मंजुदेब

म आ'को मास नहुँदै

सुनको ढोका पाँचौटा खापा

पिरतीले आरती गरौं
दीपंकर (दीपंखा) जाऔं

६. श्री ५ सुरेन्द्रवीरबिक्रम शाह–
भगवान् पर्वत-शिखरमा
लोकनाथ गरे चाँडै उद्धार
श्री बुद्ध भगवान् लुम्बिनी वन आए

७. श्री ५ पृथिवीवीरविक्रम शाह–
हरि म कहाँ जाऊँ
यस्तो रसरंग छोडी

८. श्री ५ त्रिभुवनवीरविक्रम शाह–
बाह्र वर्षसम्म जल वृष्टि नभएर

९. श्री ५ महेन्द्रवीरविक्रम शाह–
विश्वशान्ति गरिदेऊन्

# विषय-सूची

## सामयिक भजन



## सामयिक सामाजिक

## सामान्य भजन

## सामान्य सामाजिक



## ख्याली (प्रेम रस एवं व्यंग्य)

## बाल-गीत



## परिशिष्ट

## सामयिक भजन

प्रत्येक सामाजिक क्रियाकलाप देवी-देवतासँग सामञ्जस्य भएको नेवारी संस्कृतिलाई केही खोतल्न प्रयत्न गरिएमा हामीलाई स्तंभित तुल्याउँदै प्रत्येक देवी-देवताको आफ्नै प्रकारको जिउँदो एवं रोचक कथाको याद दिलाउँछ। मानिसको आफ्नो कार्य-प्रवृत्ति-अनुसार पुजिने प्रत्येक स्थानका प्रत्येक गणेशका आफ्नै विशेषता, प्रत्येक भगवतीका आफ्नै प्रकारका शक्ति-भावना तथा भावना-अनुरूपका देवी-देवता नेवारी संस्कृतिमा मार्मिक किन्तु रोचक घटनाको रूपमा बोल्न खोज्छन्।

यद्यपि गणेश एउटै हुन्। भैरव एउटै हुन्। तर नेवारी संस्कृतिमा विभिन्न विशेषताको याद दिलाउँदै सामान्य भजन-कीर्तनको अतिरिक्त वार्षिक जात्रा, पूजा आदिद्वारा यी विभिन्न देवी-देवताको आह्वान गरिन्छ। र सामयिक भजन गाइन्छन्। आफ्नै प्रकारका विशेष बाजाहरूद्वारा गाइने नेवारी संस्कृतिका यी भजन त्यस वेला नेपाली धरातलमा वरपरका वातावरणलाई आकर्षक गर्दै सलबलाउँदै बग्न खोज्छन्। कुनै खास समयको आगमनको संकेत-स्वरूप यी सामयिक भजन नेपाल अधिराज्यको यत्रतत्र भागमा गाइन्छन्– विशेष पूजा-आजा भाव-भक्तिका साथ। यहाँ केही सामयिक भजन दिग्दर्शनको निम्ति प्रस्तुत छन्।

●

## हे हे माधव, नदिए पीर मनमा

हे हे माधव नदिए पीर मनमा पिरती राखे अब ।

शिरमा मुकुट सुवर्णको वनमाला लाएर
मथुरामा गई बस्यौ नि
तन केशरीको रंग, श्रीखण्डको सुबास
स्नेह किन राखेनौ नि ?

हे हे माधव नदिए०

बन बन घुमी हिंडे काढाँले घोचे– पाइनँ थाहा
मन थाम्न सकिनँ नि
बाँसुरीको धुन सुनें, व्यग्र भै घुमी हिंडे
तिम्रो माया छैन नि ।

हे हे माधव नदिए०

भर्खरको यो जोबन, कोकिलको शब्द सुनी
यो सुवेलामा आएँ नि
अनाथको पुकार, ऋतु हो वसन्तको
अबलाको लेऊ पुकार सुनी ।

हे हे माधव मदिए०

## नारायणजी पर्वतछेउ

नारायणजी पर्वतछेउ सहर्ष विराजमान ।

दिन दिन तीन रंग अति मनोहर स्वरूप
हे राम, दायाँ हात चक्र लिई, बायाँले फुकी शंख प्रभुजी !
नारायणजी पर्वतछेउ०

शिरमा नागमणि शरीरमा नागफणि
हे राम, गलामा छ तुलसीको माला प्रभुजी !
नारायणजी पर्वतछेउ०

स्वच्छ सुन्दर नीर रंग कमल-लोचन
हे राम, दर्शन दिए मलाई आज उठीकन प्रभुजी !
नारायणजी पर्वतछेउ०

नेपालका छत्रपति श्री जय भास्कर मल्ल
हे राम, राज्य होस् नृपलाई विशाल प्रभुजी !
नारायणजी पर्वतछेउ०

प्रार्थकको बिन्ती दया राखिदिए
हे राम, घुमीकन आई दर्शन दिए प्रभुजी !
नारायणजी पर्वतछेउ०

●

# गंगा माई निर्मल जल

गंगामाई निर्मल जल-थोपा आइन् रथमा उठेर ।

चार दिशा अन्धकार भयो अब देव हेर
नीलो रंग चढ्यो धेर वर्षा मेघ कररर ।
गंगा माई निर्मल जल०

मनुष्यको गति पनि तर निर्मल जलै छ निर्भर
करुणाले अब हेरेर भूमि सब भिजाएर ।
गंगा माई निर्मल जल०

ब्रह्मा, विष्णु, महेश्वर इन्द्र जल-धर
रवि-चन्द्र सुन्दर देव देवी-सहित र ।
गंगा माई निर्मल जल०

लोकको प्रतिपाल गर अज्ञानीको मन पूर्ण गर
देवी अब पूर्ण गर प्रार्थकको कोटी नमस्कार ।
गंगा माई निर्मल जल०

●

## आए श्री मञ्जुदेव

आए श्री मंजुदेव हर्षले नेपाल ।

हादे– सिंह चढी चन्द्रहास खड्ग समाई
दुई देवी लिईकन साथमा
ज्योतिरूप स्वयम्भू हतपताईकन
नागवास दहबीच सुवर्ण कमलमा ।
आए श्री मंजुदेव०

हादे– कालिको प्रमुख नागराजालाई
ल्याई, परस्पर बसे आनन्दमा
कोकिल आदि चक्र वंश हंस
अनेक जल पंछीको बास ।
आए श्री मंजुदेव०

हादे– अगाध दह देखी पानीमा पस्न
डर भई, गए कपोतल पर्वत

देव, दैत्य, मनुष्यको मनको भाव
    हेरी, पर्वत काटी जल निकाले ।
आए श्री मंजुदेव०

हादे– नागराजा पनि ल्याई दहमा बास दिई
    स्वयम्भूको दर्शन गरौं
चार शिर छिद्र रंग वर्ण सहकाल
    नरपति राजेन्द्रविक्रमदेव कथित
आए श्री मंजुदेव०

●

## जय ईश्वरी महाकालिका

जय ईश्वरी महाकालिका ।

मुकुट कुण्डलको प्रकाश
रूपन्तेज जगमग ज्योतिको
निधारमा टीका छन् तीन नेत्रको
सक्तिनँ बयान गर्न म कालिका !
जय ईश्वरी महाकालिका
१

लाएर मुण्डमाला दर्शनीय स्वरूप
आमा त्रिभुवन लोकका
ध्यान अपार, शरणागतको
हरिदिने जग-दुःख कालिका !
जय ईश्वरी महाकालिका
२

भूत वेताल कंकालबीच
राज हुने हे मातृका
अमृत रस पिई, खड्गपात्र लिई
कामी थर्थर चण्डिका !
जय ईश्वरी महाकालिका
३

दाह्रा किटी रणमा घुसी
असुर-मोचन गर्ने कालिका
देवी महामाया, सुदृष्टि रहोस्
दासको पुकार यति मातृका !
जय ईश्वरी महाकालिका
४

## शीतला माई गरन रक्षा

शीतला माई गरन रक्षा जीवन शिशुको ।

बचायौ भने किकिंपा राम्रो अर्पन्छु चाँदीको
शीतल गर्ने शीतला माई बछला रक्षाको
शीतलामाई नलेऊ हत्या बालक शिशुको
नलिए हत्या किकिंपा राम्रो अर्पन्छु सुनको ।
शीतला माई०

बचायौ भने मुन्द्रीको माला अर्पन्छु सुनको
शीतला माई नलेऊ हत्या बालक शिशुको
नलिए हत्या चमर छत्र अर्पन्छु भएको ।
शीतला माई०

शीतला माई नन्वाए मन पाउमा पर्दछु
एउटै छोरो नलेऊ हत्या पुकार गर्दछु
बचाए जोडो परेवा अनि भँगेरा चढाउँछु ।
शीतला माई०

●

# शीतलामाई

शीतलामाई हेरि देऊ प्रजाको हवाल ।

कहिले नसुनेको कहिले नदेखेको
काँचो बालक राख्ने होइन—
महाराजको हुकुम भयो ।

१

झ्याली पिट्दै, बाजा बजाउँदै
सिपाहीले घेर्न लगाए
काँचो बालक निकाली पठाए ।

२

खाने चिउरा काखो च्यापी
काँचो बालक पीठ बोकी
जानुपर्‍यो तामाकोशीपारी ।

३

एउटा बालक पीठ बोकी
एउटा बालक काखी च्यापी
अर्को चाहिं घिसारी लग्यौं ।

४

काठमाडौंबाट उठी गयौं
भादगाउँ वास बस्यौं
तलेजुमाईको दर्शन गरौं ।

५

भादगाउँबाट उठेर गई
बनेपामा बास बस्यौं
चण्डेश्वरीको दर्शन गरौं ।

६

बनेपाबाट उठी गई
पलान्चोक बास बस्यौं
भगवतीको दर्शन गरौं ।

७

पलान्चोकबाट उठी गई
दोलालघाट बास बस्यौं
भीमसेनको दर्शन गरौं ।

८

दोलालघाटबाट उठी गई
तामाकोशी बास बस्यौं
जानुपर्छ तामाकोशीपारी ।

९

दोलखाबाट उठेर गई
तामाकोशीपारी पुग्यौं
महादेवको दर्शन गरौं ।

१०

खानलाई चिउरा छैन
लगाउन लुगा छैन
बस्नलाई बास कतै छैन ।

११

डोरी होइन, लट्ठी होइन
सिस्नुले पिटीपिटीकन
सिपाहींले घेरा दिइल्याए ।

१२

बिफर दिने कछलामाई
पानी भर्ने शीतलामाई
लैजाने बछलासँग माग्छु ।

१३

यो बालक रहेदेखि
उडाउँछु परेवा जोडी
चढाउँला कुन्दफूल सुनचाँदीको ।

१४

घाम नफुल्किने ठाउँ सेपिलो
बालक मरिहाल्यो चिसो लागेर
आमाबाबु छाती पिटीपिटी रोए ।

१५

पाइँदैन बालक मरेको जलाउन
पाइँदैन खाडलमा पनि पुर्न
प्रजाको कस्तो हवाल ।

१६

आधा बालक आमाले लिई
आधा चाहिं बाबुले समाई
तामाकोशीमा खसाल्न पर्‍यो ।

१७

शीतलामाई दु:ख नदेऊ
सहस्र मेरो बिन्ती
गरिदेऊ लोकको उद्धार ।

१८

●

## दीपंकर (दीपंखा) जाऔं

थछ्यंबाट जम्मा भई गए
बुंगमती इखा भैरवस्थान
देवसिद्ध हिरिमगिरो
लुत्ताबहा श्रीकरुनामयस्थान ।

त्यांगाका गणपति देव
खोकनाका रुद्रायणीस्थान
चोभारका गणपति देव
चोभारकै नवनागस्थान ।

आनन्दधारी श्री लोकेश्वर
चोभारमुनि महादेवस्थान
चोभारमुनि गणपति देव
नखुको ब्रह्मायणीस्थान ।

पांगालका महेश्वरी देवी
हासपोता गणपति देव

लोहँगालका इन्द्रायणी देवी
पचलीको भैरवस्थान ।

मतलिका महालक्ष्मी देवी
बुद्धबारीको कालिकास्थान
अट्को नारायण देव
काठमाडौंको गणपतिस्थान ।

तब्वक्वका भीमसेन देवता
टंकेश्वर महादेवस्थान
खुसिंवहिलका बोधिसत्त्व
किन्डोलका शाक्यसिंह
देताख्वायको दर्शन गरौं ।

फस्को भैरव, आदीश्वर महादेव
इचंगुको नारायणस्थान
इचंगुको मण्डल चैत्य
हलचोकका श्री विष्णु देवी
महामञ्जुश्रीको दर्शन गरौं ।

पुरानो स्वयंभू भगवान्
स्वयंभू बहालका शाक्यसिंह
हारती माईको दर्शन गरौं ।

स्ययंभू भगवान्, बसुन्धरापुर
वायुपुरको दर्शन गरौं ।
अग्निपुर, शान्तिपुर
नागपुरको दर्शन गरौं ।

विद्याधारी देवी माई
श्री इन्द्रायणी देवी
श्रीघलको भगवान्स्थान ।

ठवहिलका बोधिसत्त्व
पकनाजोलका गणपति
ह्मैपीको जोगाम्बरस्थान ।

पोनेपाको चन्द्रमा श्रीसूर्यदेव
लाजिंपातको नारायणस्थान
सांख्वाका नागराजा देव
सांख्वोनाका सरस्वती देवी

नारायणहिटी नारायणस्थान
नक्सालका महादेव प्रभु
नक्सालका भगवती देवी
आकाश ब्रह्मायणीस्थान ।

टुंडाल विष्णुदेवी धुंबाराही
चाबहिल गणपतिस्थान
धन्य चैत्य ग्वाल महाकाल
हारती माईको दर्शन गरौं ।

खास्तीतीर्थ भगवान् बागमतीस्थान
गुहेश्वरीको दर्शन गरौं
गोरखनाथ राजेश्वरी
बछलादेवीको दर्शन गरौं ।

मृगस्थलीको दर्शन गरौं
बासुकी नागराजा देव
पशुपतिको दर्शन गरौं ।

जयवागीश्वरी वनकाली
कामनिलंखुको दर्शन गरौं
गुथुलोहंतको दर्शन गरौं
कुतिवहाल महादेवस्थान ।

कुतिबहालको भगवान्स्थान
सिकबहिलका चामुन्डादेवी
क्वाच्छेका कुमारी देवी
भंगिलीका सिद्धिलक्ष्मी देवी ।

गर्तेश्वर महादेव सूर्यविनायक
जलहरि लोकेश्वरस्थान
दोलन्यामाई लगनेश्वर
मतिको-भैरवस्थान ।

लगनस्तूपका भगवान्
थछ्येंमाईको दर्शन गरौं
जाऔं साथी दीपंकर घुम्न
देवी देवताको दर्शन गरौं ।

यो समयमा नरपति
श्री राजेन्द्रविक्रम शाहदेव
नौ सय पयँसठी साल
आश्विन पूर्ण संक्रान्ति दिन ।

●

## सामयिक सामाजिक

लोकगीतले मानवको व्यतीत कालको अन्तर्वेदना व्यक्त गर्छन् भने क्लान्त जीवनमा सान्त्वना एवं मनोरञ्जन प्रदान गर्न पनि सक्छन् । त्यसैले लोकगीत सम्बन्धित समाजको एउटा जीवित इतिहास पनि हो । व्यतीत कालको सामाजिक रहन-सहनको अतिरिक्त उसका आक्रोश, क्रन्दन, अभिशापको साथै प्रेम, व्यथा, मनोरञ्जन आदिलाई पनि सजीव तुल्याउँदै लोकगीतले हामीलाई उठाउन खोज्छन्, बिउँझाउन चेष्टा गर्छन् । त्यसैले लोकगीत हाम्रा आफ्नै अन्तर्द्वन्द हुन्, हाम्रा आफ्नै व्यथा हुन् । व्यतीत कालका हाम्रा आफ्नै कथा हुन्, जसले हामीलाई बराबर घचेट्न आउँछन्, स्पर्श गर्न आउँछन् ।

अन्तर्द्वन्द अथवा विभिन्न व्यथाले पीडित यी सामयिक सामाजिक लोकगीतले कुनै खास समयको आगमन अथवा ऋतुकाललाई संकेत गर्छन् । हुन सक्छ— ती त्यसै समयमा घटेका घटना हुन् । विशेष गरी उपत्यकाको उर्वरा भूमिमा व्यस्त तुल्याइएको कृषक-जीवनमा रोपाइँ-गीतले उनीहरूलाई साथ दिएको

छ भने रोपाइँपछि धनधान्य अन्नको प्रचुरतामा विभिन्न चाडपर्वअनुकूल घाटु, मालश्री आदि लयमा उनीहरू आफैलाई बिर्सन खोज्छन्— यहाँका माटोमा। त्यसैले यसैको क्रममा यहाँ केही सामयिक लोकगीतको सम्झना ल्याउन चेष्टा गरिएको छ।

# म आ'को मास नहुँदै

म आ'को मास नहुँदै स्वामी ल्हासामा जान्छु रे
हे मेरी सासू वहाँलाई रोक्नुस् यो एक बार है ।
दुलही मेरी त्यो छोरोलाई रोक्न म सक्तिनँ
रोजगार छैन छोराको आज कसरी रोकूँ म ।

१

हे मेरी सासू, नभए केही वहाँको रोजगार
दाइजो मेरो भएको सबै सुम्पन्छु जरूर ।
दुलही मेरी नलेऊ घन्दा यसरी मनमा
वर्ष, छ मास बसेर मात्र फर्किन्छ घरमा ।

२

पोखरीबीच नभए पानी माछा त कसरी
सक्छ र बस्न बिन्ती छ रोक्नुस् वहाँलाई यस घडी

हे मेरा स्वामी ल्हासामा जाने नगर्नुस् विचार
छोडेर घर लक्षण शुभ देख्तिनँ हजूर ।

३

हे मेरी प्रिया, बस्दिनँ धेरै बिरानो देशमा
एक-दुई वर्ष बसेर मात्र फर्कन्छु घरमा ।
बचन मेरो नलाग्ने भए पार म माग्दछु
माइत गई आमाको पाऊ शरण पर्दछु ।

४

सक्तिनँ दिन तिमीलाई पार मेरो यो घर नै
सुम्पेर जान्छु सम्भार गरी राम्ररी बस्नू है ।
नभए पानी पोखरीबीच कमल फुल्छ र ?
देख्तिनँ मैले त्यो फुल्ने आशा मन भो दिक्दार ।

५

यो शुभ दिन यो शुभ वेला ठाउँ यो मंगल
धीरज गरे नरोए यहाँ गरेर अमंगल ।
दाहिने हात सगुन थापी देउरे हातले
पुछेर आँसू नहेरी फर्की जानुभो प्रभु है ।

६

चोटाको कोठा झ्यालमा बसी बाहिर हेर्दामा
प्रभु ती मेरा रोएर हरे जानुभो ल्हासामा ।
हे प्रभु स्वामी नलिए धन्दा भएर व्याकुल
बाटोमा हेरी बिस्तारै जानुस् नभई विह्वल ।

७

यो ख्याल पुग्यो मलाई हेर्न रहन घर यो ।
ती मेरा प्रभु कसरी आज बनको बास भो ।
बस्नुभो कहाँ ती मेरा प्रभु कहाँको बनमा
सकिनँ राख्न यो मन रोयो कल्पेर छिनछिनमा ।

८

माथि छ हेरे पर्वत अनि तलतिर नदी छ
सुसाइरह्यो यो कानभरि पानीको प्रवाह ।
रूखको पात ओछ्यान गरी ढुंगाको सिरानी
ताराको ओढी सिरक हाय बस्नुभो होला नि ।

९

ती मेरा प्रभु सम्झना आई विह्वल भो मन
हे मेरा प्रिय चाँडै नै अब फर्केर आऊन ।
लगाई माया कहाँको कहाँ ल्हासामा जानुभो
यसरी बिछोड हुने त मैले गरिनँ विचार ।

१०

आउँदाखेरि चाड र बाड रमिता-वेला त्यो
यो मन भने कल्पेर रुन्छ विह्वल बन्छ पो ।
बालेर हेरें बत्ती त मैले ख्यालमा कोठाको
त्यो बत्ती किन मधुरो हुँदै धमिलो भएको ।

११

सपनी देखें ती मेरा प्रिय बिछोड भएको
बिरह भई एक्लै म रोएँ अधीर मन भो ।

देखाएँ मैले जोतिषीलाई बिछोड हुन्न रे
दैवले आज विजोग गरे भेटिन्छ कहिले ।

१२

बालेर बत्ती सुसेवा गरें भीमसेन देवको
कुफल दिए वरदान हाय मलाई दुःख भो ।
पुग्न नै लाग्यो छ मास पत्र आएन एउटै
ती प्रभुलाई भएको के हो पाइनँ थाहा क्यै ।

१३

हे मेरी सासू बिहान पानी लिन म गएथं
सुनें है मैले अशुभ कुरा हजूरको छोराको ।
भनेको कसले बुहारी मेरी कसले हो भनेको
सकिनँ मन राख्न है मैले कसले हो भनेको ?

१४

चोटाको कोठा झ्यालमा बत्ती बालेर हेरेथें
छोराको जीऊ कुशलै ठानी विचार गरेथें ।
सधैं झैं गरी लाएथें कुचो बिहानै उठेर
कागले पनि जिस्क्याई गयो मलाई उडेर ।

१५

दुलही मेरी नलेऊ धन्दा यसरी मनमा
कागको कुरा हुन्न है सही यो शंका व्यर्थमा ।
हे मेरी सासू बिहान पानी लिन म गएथें
छोराको हित साथीले त्यहीं मलाई भनेथे ।

१६

के चिह्न ल्याए, देखाए के के बुहारी उनले
हीराको राम्रो बहाँको औंठी देखाए उनले ।
दुलही मेरी नहोऊ हट्टी यसरी तिमी है
नगरे यसमा तिमीले पक्का विश्वास कहिल्यै ।

१७

हे मेरी सासू जोर्नुहोस् अब सिन्दूर-सुपारी
म हुन्छु सती हजूरको प्यारो छोरालाई पुकारी ।
छोराले त्याग्यो के तिमी पनि त्याग्दछयौ बुहारी
म सासू पापी गएर कहाँ मर्नेछु बुहारी ।

१८

हे मेरा छोरा पापिनी आमा आउन लिन लौ
सकिनँ थाम्न मन यो मेरो कल्पेर रोयो है ।
तीनौटा चोक भएको घर बसेको तीन जना
आज म त्यही घरमा बस्ने कसरी एक जना ।

१९

छिमेकी फुपू नरुवाए है यी मेरी सासूलाई
सबैले धैर्य दिएर राखून् यी मेरी सासूलाई
गउनको कालो लाइछन् चोलो दोरीको पछ्यौरा
बसिन् है उनी छिटको राम्रो लाएर फरिया ।

२०

अदुवा, च्यूरा ल्याएको हेरे दहीमा डुबाई
ल्याउँछिन् ब्याहा आमाले अब जोरेर मलाई ।

एक जोर लुगा छ्वासलमा एक जोर जोगीलाई
एक जोर लुगा लाइन् है मीत सती भै जानलाई ।

२१

प्रधान आए राजाको अनि कुटुम्ब जम्मा भै
सबैले सती नजाऊ भनी रोक्न नै खोजे है ।
नारीको धर्म स्वामीको सेवा सिवाय अरू के ?
जानेछु अब शरण वहाँको उपाय अरू के ?

२२

हे आमा लौन, हे बुबा लौन विधि पुऱ्याउन
सम्झेर स्वामी भएर सती जान्छु है आज म ।
कसैले पनि नसकी रोक्न दिएछन् बिदा हैं
मानेर हर्ष मनमा अति जान नै लागिन् है ।

२३

निकाले उनी त्यो घरबाट शहर घुमाए
पुऱ्याए उनी सबले मिली मसान-घाटमा ।
चितामा बसी गौरी र शिव पूजेर बसिछन्
स्वामीमा मन राखेर उनी सभक्ति बसिछन् ।

२४

गुवाजु मेरो, नदिनू कष्ट मलाई तिमीले
प्राण यो मेरो सकेको छिटो लिनू है अहिले
दुलही नानी, नलेऊ धन्दा मनमा तिमीले
नदिई कष्ट छिट्टै नै मुक्ति दिनेछौं हामीले ।

२५

चितामा बसी सिध्याइन् विधि चाहिने सबै नै
पोडिनीसँग लाएर मीत शान्त भै बसिन् है ।
बिदाइ लिइन् बसेर त्यहीं ईश्वर सम्झेर
आफ्नो त्यो प्राण उनले हाय गईन् है छोडेर ।

२६

गएको तीन बरखपछि छोरो त फर्केछ
बाहिरतिर ढोकाको मुनि बोलाइरहेछ ।
आवाज सुनी आमाले हेरिन् खोलेर झ्याल त्यो
छोराको मुख देखेर रोइन् बूढी त चौपट्ट

२७

नआऊ माथि हे मेरा छोरा मरेको ठानेर
तिम्रो त्यो चिह्न जलाइसक्यौं मसान लगेर ।
भनेको कसले हे मेरी आमा म मरें भनेर
दुलही मेरी गएकी कहाँ यो घर छोडेर ।

२८

मरेको कुरा हितको तिम्रो साथीले भनेछन्
दुलही तिम्री भएर सती प्राण नै छोड्दिइन् ।
भनन आमा देखाए चिह्न के के हो उनले ?
हीराको तिम्रो औंठी नै उनले देखाए भनिन् है ।

२९

बालिका नारी देखेर छले हितको साथीले
नरको धर्म विवेक कत्ति राखेन पापीले

देऊन आमा मलाई अब झोली र तुम्बा त्यो ।
देशान्तर फिर्छु लिएर नाम अब म हरिको ।
३०

सबैले हेर्न आएछन् बिदा उनले मागेछन्
सबैको आँखा आँसुले भरे सबै नै रोएछन् ।
रुवाई सबै जननीसँग बिदाइ मागेर
ईश्वर सम्झी लिएर नाम निस्के है वाहिर ।
३१

( नृपति श्री राजेन्द्रविक्रमदेवको प्रताप
उदय भई उज्ज्वल भयो नेपाल-मण्डल )
सुज्ञानी जन सबले हाँसो नगरी दिए है ।
भएको दोष सम्झेर भूल क्षमा नै गरे है ।
३२

●

## मंगल गरे श्री भीमराज

मंगल गरे श्री भीमराज अनिष्ट नगरे ।

मलाई दिए हेरेर बैंस आमा र बाबुले ।
ल्हासामा जाने विचार किन गरेछन् स्वामीले ।
भएको छैन वर्ष दिन पनि ल्हासामा जान्छु रे
प्रीतमविना कसरी वस्ने म हुन्छु विह्वल ।

१

सकिनँ रोक्न सम्झाएँ मैले शिरले नुहेर
यो मेरो मन तड्पिन्छ अति वियोग सम्झेर ।
काममा मैले भुलाएँ कति रोक्न नै खोजेर
अनेक रस देखाएँ तर भइछु निष्फल ।

२

हे मेरा स्वामी सहस्र बिन्ती नछोड मलाई
बैंसमा यस्तो प्रीतमविना रहने कसरी ?

नलाग्ने भए बचन मेरो पार म माग्दछु
शरण पर्न आमाको पाऊ घरमा फर्कन्छु ।

३

जोबन मेरो प्रीतमविना रहने कसरी ?
सक्तिनँ बस्न प्रीतमविना नछोड यसरी ।
सक्तिनँ दिन म पार बरु सुम्पन्छु यो घर
सम्भार गरी बिचार गरी तिमीले बस्नु छ ।

४

निश्चय गरें जाने म भएँ नरोक मलाई
हाँसेर अब मंगल-विदा देऊन है मलाई ।
मंगल दिन समय घडी विचार गरेर
तिमीले अब पठाऊ मलाई मंगल भरेर ।

५

सगुन लिई बाटोमा गरे मंगल-कामना
विह्वल मन पार्नु छ शान्त मनको मनैमा ।
आएको बाटो नदेख्ने हाय आँसुको धाराले
पछाडि पो फन् पाइलो मेरो सर्दछ दुःखले ।

६

घरको ढोका खोलेर पस्न मन नै भएन
विह्वल भयो मन यो आँसु चुहुन छोडेन ।
कोठामा गएँ देखेंछु मैले अँध्यारो केवल
आँखाको आँसु पुछेर बसें शोकले नुहेर ।

७

प्रीतम मेरो नभई आज खाएकै भएन
यो मेरो मन अधीर भयो राख्न नै सकिनँ ।
शरीर मेरो हाड र छाला सुकेर गएर
सन्देह भयो शरीर मेरो रहन्न भनेर ।

८

ल्हासामा पुगें भनेर पत्र बल्ल पो आएको
कुशलै पुगें भनेर उहाँले पत्रमा लेखेको ।
मन त्यो तिम्रो उडेर जाला अधीर नभए
पत्रमा उहाँले लेखेको देखें अधीर नभए ।

९

रात र दिन प्रीतम मेरा सम्झन्छु कलकल
शरीर मेरो सुकेर गयो कल्पन्छु पलपल ।
दायाँ र बायाँ हेरेर बस्छु एकलो भएँ म
अधीर मन सुकेको तन कसरी थामूँ म ।

१०

प्रीतम मेरा फर्कन्छन् आज सन्देश आएको
फर्कन्छु भनी उहाँको त्यही पत्रमा लेखेका ।
सन्देश पाई मनमा भयो तिर्सना लागेकै
सकेको छिटो दर्शन गर्न इच्छा नै जागेकै ।

११

रात र दिन सम्झेको मैले भीमसेन देवता
तो मेरा प्रिय सकेको छिटो अब ता फर्काए ।

यो दुःख नाश गर्नेछन् मेरो श्रीभीमसेनले
प्रसन्न भई गर्नेछन् पूर्ण यो मन उनैले ।

१२

प्रीतम फर्के श्रीभीमसेन देवको दयाले
शरीर उहाँको कुशलै फर्क्यो म भएँ हर्षित ।
नारीको तन, मन यो सब मंगलमय भो
हृदय भयो आनन्दी अति रसमा डुबीगो ।

१३

साथमा बस्न पाएँ श्रीभीमसेनको दयाले
रमाई अब रस र रंग गर्नेछु हर्षले ।
रस र रंगमा म भुली बस्दा बिहानी चिहायो
अतृप्त मन म उठ्न आज अबेर भैगयो ।

१४

श्री रणबहादुर नेपालका वीर छत्र-पति
अनेक धर्म प्रभाव-फल सद्धर्म-भूपति ।
लिएर धन्दा लोकको अब राखून् है स्थिति
आनन्द होओस् नृपमा देशसहित संवृद्धि ।

१५

## पिरतीको पुरुषले छाडी गए

पिरतीको पुरुषले छाडी गए मलाई

जानुभयो ल्हासा भयो है वनबास
मेरो मन भयो अति विह्वल है ।
वहाँको चरणमा बस्ने मेरो अति रस
भयो मेरो मन अति आतुर है ।

१

मनले खोजेछैं दिएनन् दैवले
छोडी गए ती पुरुषले मलाई है
नारीको तन, मन दिएनन् दैवले
मिलन गराइदेऊन् ती प्रभुसँग है ।

२

चमेली फुल्यो अति बासनाले
भँवराले रस लिन पाएन है

राती सम्झिरहें, म एकलै रोएँ
मैले मन राख्न सकिनँ है।

३

रात दिन सम्झिरहें भीमसेन देवता
मेरो प्रभु चाँडै फिर्न् है
मनको संतापले मेरो शरीर सुकिसक्यो
गयो मेरो जुनी व्यर्थैमा है।

४

फिर्नुभयो प्रभु भीमसेनको दयाले
बाटोको कुरा नै केही गरूँ है।
रूप अति राम्रो मुसुक्क हाँसी देखाए
कुरा गरूँ– अति राम्रो वचन है।

५

असार कृष्णको आठ सय छयान्नब्बे
अमावस्या सोमवारको दिन है।
या वेला नेपालका नृपति
श्री सिंहप्रतापदेव है।

६

## मणिचूड राजा

भवभूति ऋषीश्वर धर्मपुत्री पद्मावती
कन्यादान दिन भनी आए है ।
साकेतु नगरका मणिचूड राजाले
पद्मावती कन्यादान लिए है ।

१

मणिचूड राजाले अति खुशी भएर
गुरुलाई दक्षिणा दिन लागे है
दक्षिणा दिने भए निरगड (?) यज्ञ गरी
पुण्य सबै यज्ञको मलाई दिए है ।

२

ऋषिको वचन सुनी निरगड (?) यज्ञ गन
गुरुसँग फेरि उपदेश मागे है

गुरुले आज्ञा दिए विधि विधान सम्झी
सकल प्रजागण जम्मा गरे है ।

३

दुरुपस राजा प्रमुख देश-देशका राजा
निमन्त्रणा सबैलाई पठाए है
मणिचूड राजाको बचन सुनी
सकल राजा पनि आए है ।

४

गुरु-पुरोहित प्रमुख सकल राजा
यज्ञ हेर्न भनी आए है
पूजा आरम्भ स्वस्ति-वाक्य होम गरी
शास्त्रको प्रमाण हेरे है ।

५

यज्ञ विघ्न गर्न भनी यही वेला
छल गरी इन्द्र आए है
इन्द्र-रूप छोडी राक्षस रूप लिई
यज्ञमा प्रवेश गऱ्यो है ।

६

सुबाहु मन्त्री बुद्धिसेन कोतवाल
दुरुपस राजासहित है
निरगड यज्ञको बीच
भयानक राक्षस आयो है ।

७

यज्ञबीच राक्षस उफ्री बस्यो
यज्ञको दक्षिणा माग्यो है
मणिचूड राजाले दक्षिणा दिन भनी
दौलत दक्षिणा दिए हैं ।

८

राक्षस जातलाई दौलत के गर्ने
भोजन दक्षिणा देऊ है
पञ्चामृत भोजन बनाएर
दक्षिणा लेऊ– राजाले भने है ।

९

पंचामृत भोजन गर्न आएको होइन
मलाई त मद्य-मांस देऊ है
दक्षिणा दिने भए मद्य-मांस देऊ
कि मलाई बिदा दिई पठाऊ है ।

१०

मणिचूड राजाले निरगड यज्ञ गरी
आफ्नो मांस दक्षिणा दिए है
लेऊ लेऊ राक्षस मेरो रक्त-मांस
दक्षिणा दिन भनी आएँ है ।

११

यज्ञबाट ओर्ली राजाको जीऊ समाती
मूल नसा समाई भोजन गऱ्यो है

राजाले देखे राक्षस कामेर
हुं-हुंकार शब्द गरी बस्यो है ।

१२

राजाको आज्ञा– तिमी सन्तोष हुनुअघि
मेरो शरीर विसर्जन हुन्छ है ।
रक्त खान पुग्यो मांस दान देऊ मलाई
भोकले तड्पी बसेको छु है ।

१३

आफ्नो पुत्र पद्मोतर, पद्मावती रानी
सकल प्रजा लोक कल्पी रोए है ।
रोएको सुनेर राक्षस रिसाई
हुंकार गरी कराई बस्यो है ।

१४

राजाको आज्ञा भयो राक्षस बोलाई
तृप्त गरी तिमीले खाऊ है ।
धन्य धन्य मणिचूड तिम्रो दया कृपाले
म अति कृतार्थ भइसकें है ।

१५

राक्षस-रूप छोडि इन्द्र-रूप लिएर
जडीबुटीको आराधना गरे है ।
इन्द्रले औषधि आराधना गरी
राजालाई लगाइदिए है ।

१६

इन्द्र बिदा लिई अन्तर्धान भइगए
राजा नमस्कार गरी बसे है ।
मालिचि ऋषीश्वरले मणिचूड राजासँग
पद्मावती दान मागे है ।

१७

मणिचूड राजाले आफ्नी रानीलाई
यज्ञको दक्षिणा दिए है ।
मणिचूड राजाले यज्ञपूर्ण गरी
गुरुलाई दक्षिणा दिए है ।

१८

दौलत द्रव्यसहित हस्ती-रत्न राखी
गुरुलाई दक्षिणा दिए है ।
सकल लोक राजासँग बिदा मागी
आ-आफ्ना घर फर्की गए है ।

१९

दुरुपस राजाले दुर्मति लिएर
हस्तिरत्न माग्न पठाए है ।
हस्तिरत्न दिने कि संग्राम गर्ने
कि राज्य छोडी जानुपर्‍यो ।

२०

संग्राम गरे प्रजाले दुःख पाउँछन्
अब मैले के गरी बस्ने है ।

यसै समयमा प्रत्येक बुद्ध आएर
तपस्या गर्न उनलाई लगे है ।
२१

पद्मावती रानी फूल टिप्न
वन-वन घुमिरहिन् है ।
इन्द्रले व्याधा भई पद्मावती रानीलाई
लहराले तानी लगे है ।
२२

पद्मावती रानीले मणिचूडको नाम लिई
अत्यन्तै विलाप गरिन् है ।
मणिचूड राजाले भरोसा दिएर
व्याधाले छोडेर गयो है ।
२३

पद्मावती रानीले राजाको सेवा गरी
स्नेहले रोएर बसिन् है ।
राजाले बोध - गरे ऋषिको सेवा गरे
पछि मोक्ष गति पाइन्छ है ।
२४

दुरुपस राज्यमा खराब रोग पस्यो
रोगले पीडा दिइरह्यो है ।
रोग शान्त गर्न मणिचूड राजासँग
मणिदान माग्न पठाए है ।
२५

ब्राह्मण आएर मणिचूड राजासँग
मणि दान मागी बसे हैं ।
धर्म, अर्थ, कामनाले मोक्षको आशा लिई
मणि दान लेऊ भने है ।

२६

ब्राह्मणले पनि करौंती लिएर
राजाको कपाल भिजाए है ।
भूमि कम्पमान भयो यसै वेला
देवलोकमा हाहाकार भयो है ।

२७

मणिदान लिई मणि पखालेर
जलसिंचन गरी दिए है ।
मणिचूड राजाको धर्म-प्रभावले
शरीर निर्मल भयो है ।

२८

## नव नाग मेघका राजा

हादे– नव नाग मेघका राजा जलवृष्टि गरी प्रसन्न ।

हादे– भलभल अष्टमी रोपाइँको दिन छानी
सबै मिलेर आज रोपाइँ गरौं है
भेला भई साथी घुम, कोदाली लिईकन
ठिटीहरू एक्लै बाटो लागे है ।
नव नाग मेघका राजा०
१

हादे– हाँसी हाँसी ख्याल गरी बुहारी भनेर
हिंडेको पत्तै नपाई खेतमा पुगे है
भुईमा घुम छोडी बाहुला माथि तानी
हर्षले आज गरौं कुलको काम है ।
नव नाग मेघका राजा०
२

हादे– फरिया माथि सारी धानको बीऊ लिई
हाँसी हाँसी आज लागौं रोपाइँमा है
आपसमा ख्याल गरी बुहारी भनीकन
याहै नपाईकन रोपाइँ सिद्धियो है ।
नव नाग मेघका राजा०

३

हादे– रोपाइँ सिध्याइवरि वाटो लागेपछि
भाजुले मसँग कुरा गर्न लागे है
भाजुको घरमा गई छिडीमा लुकिरहें
भाजुले तानेर मलाई लगे है ।
नव नाग मेघका राजा०

४

हादे– यसरी नचल न सहस्र बिन्ती मेरो
कोपिला फूल आज विगारी नदेऊ है
के हो पुरुष मलाई ? मन मेरो डराउँछ
हजूरको मन मैले कसरी राखूँ है ।
नव नाग मेघका राजा०

५

हादे– रिसाएर भाजुले तानेर मलाई लगे
जीऊ सबै अति थर्थर काम्यो है
नचलन यसरी बिन्ती मेरो
इज्जत एउटा मेरो नलिइदेऊ है ।
नव नाग मेघका राजा०

६

हादे– इज्जत किन लिने मेरो कुरा सुन नानी
तिम्रो इच्छा सम मैले राखी छोड्छु है
स्याहार-सम्भार गरी राखेको जोबन
आज त्यसै हजूरलाई कसरी दिऊँ है ।
नव नाग मेघका राजा०

७

हादे– कुरा छ सत्य तिम्रो के माग्छयौ भन नानी
तिम्रो मन रसाईकन मैले राख्छु है
अब भयो ममाथि हजूरको दया-स्नेह
लाख मैले पाइसकें हजूरबाट है ।
नव नाग मेघका राजा०

८

हादे– देखेर तिम्रो जोबन, अरू केही होइन नि
कामको लोभ मलाई ज्यादै भयो है
शंका नलिनुस् अब, कुरा सत्य सुन्ने भएँ
सत्य धर्म मात्र हजूरले नछोडिदिनुस् है ।
नव नाग मेघका राजा०

९

हादे– आपसमा कुरा भयो, आपसमा प्रीति बस्यो
आपसको प्रीति अब नछोडिदिनुस् है
भोजन पछिको टपरी ठानेर हजूरले
सत्य वचन खेर नपठाइदिनुस् है ।
नव नाग मेघका राजा०

१०

ह्वादे– नेपालका थिति राजा, काजी राखून् धर्म
आनन्दमा रहून् सबै प्रजागण है
लेखकको सुवचन यो गीत मनोरञ्जन
भाजु-मैजु कसैले दुःख नलिए है ।
नवनाग मेघका राजा०

११

## रोपाइँ गएकी केटीको मन उडेछ

मनले गर्छु नमस्कार श्रीस्थानीय गणेश
लोकले घेरै मानेकी देवी श्रीवज्रजोगिनी
केटीको मन उडेछ हाँसी रोपाइँ गएकी ।

१

दाहिने चुल्ठी चोलो छ कालो रोपाइँ गएकी
नाकैमा छुने गरेर फूल लाएकी टाँसिन्छे
स्वास्नीले देखे गर्दछे गाली नपारे गाल है

२

कामको बोझ बिर्सनलाई नगरूँ ठट्टा क्यै ?
लोकले आज जेसुकै भनोस् हामी हौं दुई नै
छँदै छु गाली स्वास्नीले गरे यो डर किन है ।

३

त्यसो त कहाँ ? हामीले धर्म राख्नु छ, नछाडौं ।
परस्पर माया गर्ने हो किन तिम्रो छ लोग्ने है
जानु छ छोडी संसार भोलि नगरे यो माया है ।

४

त्यसो त कहाँ ? लोभिएँ देखी हरियो लँगौटी
नहुने भन्न पुगेछु मैले बुझाउन मन यो ।
लोग्ने छ मेरो खराव रूप विरह लाग्छ है

५

त्यसो त कहाँ हुन्छ र नानी मर्नु नै पर्दछ
लँगौटो देखी लोभमा परी नगरौं अधर्म
मनले मेरो खाँदैन यो त नगरे हठ है ।

६

होइन त्यसो के कुरा भाजु, गरेको यो के हो ?
मन यो मेरो टाँसेको देखी गुमान गरेको ?
साढे तीन हात मान्छेको लामो नलेऊ ज्ञान है ।

७

धर्म र कीर्ति स्थिर छ यश, संसार अस्थिर
यमको आज्ञा आउनासाथ नगई हुन्छ र ?
लोभ र माया छोडेर हामी जानु नै पर्छ है ।

८

नमस्कार छ हे नवनाग यो दश दिशाको
नमस्कार छ हे देव मेघ र वायु नभको
यो देशकाल रोपाइँ अब सफल होओस् है ।

९

कुसुम र भुज मंगल हो है नेपाल संवत
जेठको मास अष्टमी तिथि त्यो कृष्णपक्षको
ज्ञानी र गुणि जनले यहाँ नगरे हाँसो है ।
१०

●

# देवी दुधनमाई

दुधनमाई नगरी ढिलो गरन उद्धार

फुल्चोकी माई तिम्रो छ नाम लक्ष्मी समान
गति र पति नरका देवी लक्ष्मी समान ।
फुल्चोकी माई पुकार्छन् सबै मनमा श्रद्धाले
यो देश-काल रोपाइँ गर्न प्रसन्न होऊन् रे ।

१

घेलाचो माई बहेकी देवी नागिनी टौदहका
चोभारका हे मंगलदेव दायक सिद्धिका ।
ऋद्धि र सिद्धि दिएर फल होऊन् है प्रसन्न
रोपाइँ गर्न आएका सब तुल्याई प्रसन्न ।

२

दुधन गण सम्झेर हामी श्रद्धाले नुहेर
पूजा है गरौं मनले अब भक्तिले झुकेर ।

दुधनमाई भनेर बल लोकले माग्दछन्
बर्साई जल होऊन् हे देवी अब ता प्रसन्न ।

३

रोपाइँ जाने समय आयो डाक्तछ कसले
खेतमा गई रोपाइँ गरौं जाऔन पहिले ।
भेटेका दाजु ती मेरा भाजुसँग म जानेछु
यो बाटोभरि हाँसी र खेली साथमा लाग्दछु ।

४

कुन हो बाटो रोपाइँ जाने ठाउँ त्यो कहाँ छ
हजूरसाथ मलाई लगे आउने मन छ ।
आउँछु भेट्न भएर खुशी मनको मनैमा
यो मेरो घूम पहिले लानुस् हजूरसाथमा ।

५

"शरम लाग्यो फर्कूँ कि म त पुग्दैछु खेतमा
कसरी दलूँ यो खुट्टा मेरो हिलो र माटोमा ।
मुहार तिम्रो देखेर आज मन भो अस्थिर
किन हो किन चंचल भई आउँछ तड्पेर ।

६

पानी र पर्दा आनन्दै हुन्छ पाएर घूम त्यो
म तिमीसँग बस्न नै पाए आनन्द लाग्दछ ।
बादल फाटी निस्कँदा घाम घूम नै छोडेर्कै
हलुका भयो अति नै मेरो मन यो अहिले ।"

७

"कुरा र काम ढल्काए जता उतै न ढल्कन्छ
धानको बीउ साथमा लिई अगाडि जानुस् है ।
हातमा लिनुभएको बीऊ रोप्न म जान्दिनँ
त्यो धान रोपी मलाई अब सिकाए पहिले ।"

८

"वर्ष छ मास नजानू अन्त मलाई छोडेर
विचार गरी राख्नेछु मैले माया नै पोखेर ।"
"यो कुरा भाजु मलाई सत्य मन है पर्दैन
मन नै परे मलाई हजूर घरमै लग न ।

९

रोपाइँ— कार्य सिध्याईवरी लिनेछु सिल त्यो
एकादशीको सुव्रत बस्न मलाई मन भो ।
भावना भए ममाथि हजूर त्यही नै समय
पति नै सम्झी पुज्नेछु मैले-मेरो भो विचार ।"

१०

●

(यसै गीतको अर्को प्रतिलिपिमा विष्णु मल्लको नाम उल्लेख गरिएको छ)

# वासुकि नवनाग

विश्वको विध्न-विनाश गर्ने सिद्धिदा गणदेव
वर्षाको जल बर्साइदिने वासुकि नवनाग
सुरक्षा गर्ने मछिन्द्रनाथ यी सारा त्रिभुवन ।

१

मछिन्द्रनाथले लोक, धन्दा लिई ताकेता लगाई
मेघका राजा, गन्धर्वले छोपेछन् पृथिवी
बादलभित्र भरेर पानी बर्साए जल है ।

२

वर्षाको वेला सुजल अब बर्साइदेऊन
रोपाइँनिम्ति विरञ्ची सम्झौं त्यागेर धन नै
पृथिवीलाई भिजाइदिए बर्साई जल है ।

३

रोपनी सात रोपाइँ भोलि ज्यामी तो डाक्नु छ
खिस्सी है गर्लान् ज्यामीले तिमी सिंगारिई आउनू
"हुन्छ है" जानेजतिको मैले सिंगारिई आऊँ है ।

४

लिएर ऐना सिंगार सक्दो गर्दछु पहिले
सिंगार गरी रहँदा हाँसी तर्लासि आएछन्
लिएर ऐना लुकाएँ मैले हतपत गरी है ।

५

हे मेरी नानी, जाने हो कहाँ शृंगार किन यो ?
हजूरको खेत रोपाइँ गर्न ज्यामी नै डाक्नु छ
सिंगार गरी बसेकी छु म बेर भो जान्छु है ।

६

रोपाइँ भो कि भनेर हेर्न आएको मात्र हुँ
निश्चय आज हजूरको खेत रोपाइँ सिद्धिन्छ
जान त जाऊ हे नानी तर क्यै कुरा सुन है ।

७

शरम लाग्छ के भन्ने कुन्नि हुने भए मान्दछु
देखेर तिम्रो जोबन म त काममा फस्तै छु
मनको कुरा पोखेर मैले बताइसकें है ।

८

वचन मीठो मीठो नै होस् नानी, तीतो त नगरे
कस्तो यो भाजु ? यो कुरा मेरो मनले खाँदैन
लरबर कुरा गरेर भाजु नआउनुस् भित्र है ।

९

तुल्यायौ टाढा तिमीले मेरो एउटै कुराले
म पनि टाढा तुल्याएँ अब रोक्नू त्यो रोपाइँ
पजनी गरें निश्चय अब म जान लागें हैं
१०

जानुभयो भाजु के गर्ने मैले व्याकुल भएँ म
कारणविना पजनी भा'को अरूले सोध्नेछ
पुरुषलाई यो कुरा थाहा क्यै दिनु हुन्न है।
११

कारणविना त्यो खेत मैले गुमाऊँ कसरी
हे भाजु गर्छु म केही कुरा फर्केर आउनुस् न
निराश गरी फर्काउँदिनँ नाराज किन है ?
१२

पाउलान् थाहा पतिले भनी तर्सेको मात्र हुँ
यो डर किन गुप्तीको कुरा गुप्ती नै गर्नेछु
सुखैमा हामी आलिंगन गरी क्यै छिन बसौं है
१३

जानेको रस दिनेछु भाजु आउनुस् यता क्यै
ममाथि गऱ्यो नानीले दया मन नै रमायो
नगर्ने भए प्रकट भाजु तुरन्त मान्छु है।
१४

देखेछन् ऐना थैलोको भित्र लिएर हेर्नुभयो
ठड्याई ऐना हेरेछन् मुख तलिसंग खुशी भो
दुवैले ख्याल गरेर मीठो चुम्बन लिए है।
१५

वचन राखें हे भाजु मैले माग्दछु चिह्न क्यै
परेछ वेला खालीको मौका यौटा छ मोहर
ख्याल र ठट्टा सिद्धियो जान्छु वेला त बित्यो है ।

१६

पाउलान् थाहा स्वामीले रस देखाए जानेको
पर्खन नानी जान म लागें नलिए दुःख क्यै
चम्पाको फूल लिएर जानू हतपताउँदै है ।

१७

रोकेको केले वेला त घट्क्यो कसरी ढिलो भो ?
खेतका तिमी के थाहा हुन्छ ? राजमहलको
आएछन् मीत पाहुना मान्दा अबेर भयो है ।

१८

रोपाइँ सिध्यो त्यसरी रोक्ला भनेर के थाहा
चम्पाको फूल एककौटा लेऊ राजमहलको
भएर खुशी एकौटा फूल ज्यामीले लिए है ।

१९

आठ सय साठी असार-कृष्ण अमावास्या स.प ा.
यो वेला थियो देशको नृप श्री राज्यप्रकाश मल्ल
भएछन् खुशी ज्यामी तो सबै, रोपाइँ सिध्यो है ।

२०

●

# नाचेझैं गरी आएकी

नाचेझैं गरी आएकी हेर परकी तरुनी ।

रंग छ राम्रो गुलाफी वर्ण चम्पाको कुसुम
शोभित भयो लाएको टीका झल्कियो मुहार ।

१

दारिम-फूल लाएर आज सिंगारी आएकी
चन्द्रमा सरी तुल्याई मुख हँसिली भएकी ।

२

रोपाइँमा जाने हो कि भाजु मलाई लाने हो
यो मेरो मन किन हो किन तिमीमै टाँसियो ।

३

हे मेरा भाजु पहिले गई रोपाइँ गरौंन
चिउरा मैले ती ज्यामीलाई पर्दछ ख्वाउन ।

४

मलाई आज नरोके भाजु अबेर भैसक्यो
गाली है गर्लिन् आमाले हेर अबेर भैसक्यो।

५

बारीमै बस्छु त्यै बाटो गरी आउनू जरूर
मनको कुरा भएको सबै पोख्नेछु बिस्तार।

६

हे लमी आमा ती प्रियलाई ल्याउन डाकेर
यो मेरो मन बिह्वल हुन्छ रुन्छ है कल्पेर।

७

ती मेरा प्रिय आएछन्, बस्नुस् ओछ्यान यहीं छ
बासना हुने फूल म केही ल्याउँछु टिपेर।

८

गाँसेर माला जाईको फूल गलामा पैह्राइन्
तीन है फेरा घुमेर उनको पाउमा परिछन्।

९

यी दुई जीऊ एउटै भयो मनमा रहर
सधैं नै अब मलाई दया राख्नुस् है हजूर।

१०

करुणा राखी मलाई सधैं दासी नै सम्झेर
दया र माया मनमा राख्नुस् ममाथि हजूर।

११

## नछेक्नुस् मलाई जाऔं, रोपाइँ गर्न

गोपाल, जाऔं रोपाइँ गर्न नछेक्नोस् मलाई
गन्धर्व खेत खन्छन् र कुवेर ब्यू छर्छन् रमाई ।
१

सरस्वती, लक्ष्मी धानको बीऊ रोप्न लागेछन्
बजाए बाजा गन्धर्व सब अप्सरा नाचेछन् ।
२

बजाए बंशी कृष्णले हेर मधुर ध्वनिमा
समर्थ कहाँ यो मन राख्न कलिलो उमेरमा ।
३

यसरी किन जिस्काउने हाय बिन्ती छ हजूर
मलाई एकै पटक आज छोड्नुहोस् जरूर ।
४

पोखरी पानीबिहीन अझै कमल कोपिलै
कोपिलै टिप्ला भनेर मेरो मन भो बेचैन ।

५

कोपिलै मेरो जीवन फूल बिगारी नदिनोस्
छँदैछ आशा फुल्नेछ पछि औसर दिनुहोस् ।

६

जोवन काँचो छँदै छ फुम्ने भँवरा कराई
उमेर मेरो कलिलो छँदै फुम्मिए रमाई

७

फुल्नेछ पछि जोवन मेरो बिगारी नदिनोस्
गर्नेछु पछि रसरंग छोड्नुस् अहिले मलाई ।

८

फरिया रातो, चोलो छ कालो गहुन सिंगारी
शिरमा राम्रो दारिम-फूल लाएकी कलिलो ।

९

कमल आँखा निधारमा टीका क्या राम्रो खुलेको
खाएर पान अधर रातो रंगले स्वाएको ।

१०

बाग्मती, विष्णुमती, भैरव, गणेश, पशुपति
प्रजा-पालन गरून् श्री रणबहादुर नेपालका छत्रपति ।

११

●

## मलाई कतै दिई पठाऊ

हे लमी आमा, नराखे घर दिएर पठाऊ ।

जोवन चढ्यो सकिनँ राख्न चंचल भो मन
सकिनँ आफ्नो मन यो मेरो आफैले सम्हाल्न
१

पुरुष छैन मलाई आज मन राख्ने कसरी
जोवन मेरो व्यर्थैको भयो सह्याल्ने कसरी ?
२

सकिनँ छोड्न सम्झना पनि सहने कसरी
भएन इच्छा लाउन र खान धन्दाले बेसरी ।
३

भएर दिक्क घरको पेटी बसें म रमाई
ठिटोले खास्टो समातेर तानी लगे है मलाई
४

मलाई बास्ना सुँघन भनी अतर दिएछ ।
मनको आस पुगेको मैले ठानेछु त्यै रात ।

५

भोलिको पल्ट रहेछ खोल्दा कागजको चोलो
ठानिनँ मैले गर्लान् कि भनी कपट यतिको ।

६

चिन्नु र जान्नु पुरुषसँग विश्वास नगरे
आमाको घर जान नै पऱ्यो मलाई अहिले ।

७

बोलाइदेलान् आमाले (लमी ?) मेल गर्नेछ दैवले
कर्म यो मेरी के हुने होला पाइनँ थाहा है ।

८

रोपाइँ जान मलाई लगिन् लमीले रमाई
मोहर एक लिएर ज्याला दिइछन् मलाई ।

९

रोपेको धान वतास आई उडाई लगेछ
बाटोमा स्वामी भेटिछु, कृपा कोलखु दैवको ।

१०

●

# श्री करुणामय ल्याएको हेर

करुणामय श्रीलोकनाथ उद्धार गरन ।

गोरखनाथ भिक्षाको दान पो मागन आएछन्
जनता तर कसैले पनि अन्नदान दिएनन् ।
नवनागको आसन गरी बसेछन् ध्यानमा
बाह्र वर्ष परेन पानी दुःख भो देशमा ।

१

नरेन्द्रदेव र बन्धुदत्त आचार्य सहित
करकोटक साथमा लिई गएछन् हर्षित ।
महेन्द्रश्री देशमा गई तान्त्रिक साधन
कृषक आयो कमण्डलु बोकी भएछ प्रसन्न ।

२

करुणामय नेपाल ल्याए गरेर जतन
करुणामय पाएर भयो नेपाल नूतन

गौरखनाथ बिस्तारै उठी छोड्दिए आसन
करुणामयको उनले अनि गरेछन् दर्शन ।

३

प्रसन्न भई नागका राजा मेघमा गैहाले
मुसलधारा समान ज़ल बर्साए हर्षले ।
बर्साई पानी फुलाई अन्न आहार दिएर
जीवन दिई बचाए सबै करुणामयले ।

४

धानको बीऊ छरेर सबै आनन्द मनाई
रोपाइँ गरे सबले मिली हृदय रमाई ।
रोपाइँ सबै सिध्याईबरी साउन-मासमा
पिण्डको दान अन्नको दान दिएछन् रमाई ।

५

बैशाखमास- परेवा-तिथि सुवेला परेछ
रथमा राज गराई जात्रा भएछ हर्षित ।
वृद्धि भो पुण्य जनताबीच दानको प्रभाव
देवाली-पूजा वैशाख-मास मनाए हर्षित ।

६

साँचो र कूठो यो के हो कुरा देखेन कसैले
मनको घाऊ कसैको पनि देखेन कसैले ।
प्रतापी नृप महावीर श्रीरणवहादुर
महिमा अगम् श्रीलोकनाथ प्रभाव-विचार ।

७

## जय श्रीवासुकि नागराजा

जय श्रीवासुकि नागराजा वर्षा गरिदिए है ।

नागार्जुनका भगवान्, नागार्जुनकै सिद्धगण
बालाजुमा स्नान गरी आऔं है
इचंगुको नारायण, आदीश्वर महादेव
चुनीमाईको दर्शन गरौं है ।१।

देवता सबैका गुरु श्रीमहामंजुश्री
भगवान्को दर्शन गरौं है
श्रीविद्याधरी माई, भद्रमती घोरीनाग
भगवतीको दर्शन गरौं है ।२।

ठबहिलका गरुजुजु, लुतीका इन्द्रायणी
भगवतीको दर्शन गरौं है
बूढानीलकण्ठ नारायण, फुर्सिखेलका मनमैजु
संपत्ति गणेशको दर्शन गरौं है ।३।

भोलानाथ चन्द्रेश्वरी, शिवपुरीको भगवान्
गोकर्णेश्वरको दर्शन गरौं है
विश्वनाथ बागमती, चणिचूड दहमाथि
मणिलिंगको दर्शन गरौं है ।४।

साँखुकी वज्रजोगिनी, शंख दहमा स्नान गरी
चाँगुनारायणको दर्शन गरौं है
यी देशका सरस्वती, ठिमी देशका बालकुमारी
भक्तपुरका सूर्यविनायक जाऔं है ।५।

बनेपाका चन्द्रेश्वरी, नमोबुद्ध महासत्त्व
पनौतीमा स्नान गरौं है
गोदावरी स्नान गरी बिसंखुनारायण
फूलचोकी माईको दर्शन गरौं है ।६।

चापागाउँका वज्रवाराही, बुंगमतीका करुणामय
गोपालेश्वरको दर्शन गरौं है
चतुर्भुजनारायण, फर्पिङ्ग वज्रजोगिनी
दक्षिणकालीको दर्शन गरौं है ।७।

पाँगाका भैरव, टौदहका नवनाग
बोडेका गणपतिको शरण
कोयनाका वासुकि, सिद्धिदाता गणपति
आनन्दधारी लोकेश्वरको शरण ।८।

कीर्तिपुरका बाघभैरव, तखुतीका नीलवराही
कंकेश्वरीको दर्शन गरौं है

चार्बहिलका गणपति, खास्तीका चैत्य धर्मधातु
गुह्येश्वरीको दर्शन गरौं है ।९।

जय श्रीपशुपति, वासुकि नागराजा
भएजति कुण्डको दर्शन गरों है
जय श्रीबागमती नक्सालकी भगवती
आकाश-जोगिनीको दर्शन गरौ है ।१०।

अन्नपूर्णा, लुचुमाई, जन-बहालका लोकेश्वर
तलेजुका नवदुर्गा भवानी
टुंडिखेलका महांकाल, लुमदीका भद्रकाली
पचलीभैरव जाऔं है ।११।

नर-नारायण राजा श्रीगीर्वाण महाराजको
अखण्ड प्रताप उदय भयो है ।१२।

●

# तिमी नै एक मलाई

तिमी नै एक मलाई प्रिय अरू त को छ र ?
रोपाइँ जाँदा बाटो नै भुले के थाहा हुन्छ है ।

जोबन चढ्यो पुरुषबिना वस्न म सक्तिनँ
कामले भएँ अचेत मन सकिनँ थाम्न है ।

दैवले दिए पाएँ नि मैले यही छ विनति
नारीको शोभा नयन-अर्ध जानिनँ खोल्न है ।

चोलोको भित्र दुइटा बेल सुम्पन आएँ नि
कसैको आँखा लागेको छैन रसिक के हो है ।

चिनिनँ हिजो चिनें नि आज सकिनँ छोड्न नै
सुख र भोग आधार तिमी यो मन राखे है ।

## मलाई आफ्नै घर लैजाऊ

नराख भाजु दिएर दुःख, आफ्नैमा लैजाऊ ।

तिमी-म एक भएको थाहा पाएछन् सबैले
कसैको मुख शरम लागी सकिनँ हेर्न है ।

सम्फेर मात्र म तिमीलाई कसरी रहने ?
यसरी सधैं घरमा आफ्नो कसरी बसूँ है ।

म आफ्नो घर रहँदा माग्न आउँछन् उत्तिकै
अन्त नै कतै मलाई दिन लागेको सुनें है ।

गुप्तीका कुरा खुलस्त भनें नढाँटी अहिले
नगरी ढीलो मलाई घर लैजाऊ छिटो है ।

आउने मन रहेछ तिम्रो लैजाने म भएँ
सौतासित मिलेर बस्न कसरी सक्छ्यौ है ।

सौता र सौती झगडा गर्ने नारीको स्वभाव
कलह गरी घर नै मेरो नगरे नाश है।

दु:ख यो पोख्न अरू क्वै छैन सिवाय तिमी नै
मलाई मन-वचन दिई राखिछोडे है ।

अत्यन्त दु:ख मलाई भयो नछोडे धर्म
कर्मको फल के गरूँ मैले सम्झन्छु कर्म है ।

हत्पत किन यसरी गर्ने लैजाने म भएँ
तिम्लाई आफ्नो घरमा बस्न नभए इच्छा है ।

आमा र बाबु अगाडि लोकपंच नै राखेर
लाखा र रोटी दिएर घर लैजाने भएँ है।

# बिपनी देखें, सपनी देखें

बिपनी देखें, सपनी देखें मन मेरो रहेन ।

विह्वल भई म ढोकामुनि सुत्न पुगें
प्रिय त्यही वेला मेरो नजीक आए हैं ।

रूप नै राम्रो मन मेरो रसायो
कहिले वस्न पाऊँ म तिमीसँग है ।

पिरती बसिसक्यो धर्म राखिदेऊ
लोकले खिस्सी गर्लान् भनी डर लेऊ है ।

नआई हुन्न नि दिनौं आउनू है
तिमी नै भनेर म त बस्न सक्तिनँ है ।

आफसमा कुरा भयो सत्य वचन राखे है
तिमीलाई छोड्न मैले सकिनँ है ।

अति दु:ख भयो बिन्ती छ मेरो यति
कहिले लान्छौ घरमा तिमीले मलाई है ।

प्रेमका कुरा गरौं नआई नछोड्न
के गर्ने दैवको इच्छा वलियो छ है ।

कर्मको फल हो तिमी र म सँगै बसौं
के गर्ने दैव-इच्छा वलियो छ है ।

# गोपाल धनी नरोके यसरी

गोपाल धनी नरोके यसरी रोपाइँमा जाऔं है ।

बैंस मेरो बालक छ नि, तिम्रो जोडी कहाँ छु नि
देखीकन तिमीलाई डरै लाग्छ नि ।

पुरुष के हो मलाई अनुभव छैन नि
तिम्रो रूप देख्दा खेरि लाज लाग्छ नि ।

जात मेरो ग्वालिनी रसरंग छैन नि
तिमीलाई बोध मैले गर्ने केले नि ।

हतासिने किन नि समय छँदै छ नि
पछि त मसँग रसै गर नि ।

कोपिला फूल छु नि नबिगारिदेऊन नि
समयमा अफै फुल्ने आशा छँदै छ नि ।

हृतास नहोऊन नि बिन्ती मेरा यहा छ नि
यो घडी त मलाई छोड्नुपर्छ नि ।

फूलको बास्ना सुँघी झुम्मिन्छन् भँवरा पनि
सकेजति राखी मन रस लेऊन नि ।

नृपति थितिको धनी कान्तिपुर बन्यो नि
काम-अभिलाषा नहुने त ज्ञानीजन नि ।

●

## प्रिय नछोडे मलाई

चिनेको तिमी नै एक प्रिय, छोडी नगए है ।

प्रिय तिमी नजाऊन सुन मेरो वचन
बिरहले हेरी किन हतासिने है ।
१

आँखा धनुष-बाण चंपा-फूल रंग तिम्रो
तिमीलाई देखी मन अधीर भो है ।
२

नौलो भेटमा लाग्यो मलाई अति शरम
साथीको वचन मैले काट्न सकिनँ है ।
३

हामी एक भयौं भन्न थाले ननीजन
शरमले मुख देखाउन मैले सकिनँ है ।
४

ननौमा काम गरी बसें रूपवान् भाजुले
मेरो मुखमा पान राखी गएछन् है।

५

पान खाँदा मन मन काम-गुण सम्झीकन
विह्वल भई मन तडपिरह्यो है ।

६

त्रास नलिई कत्ति पनि, धीरज गरी मन
गर भोग मलाई सकेजति है ।

७

इच्छा भएजति म देखाउँछु काम-सुख
मलाई काम-पीडा साह्रै भयो अब है।

८

सुनी मीठो वचन मानें एकै बारमा
नमानेको कुरा पनि मानिलिएँ है ।

९

स्नेहले आँखा खोली परस्पर मन जोडी
प्रिय अब दिललाई दृढ गरे है ।

१०

जान इच्छा भएन महमा फसीकन
तिमीलाई अब छोड्न मैले सकिनँ है।

११

वस्त्र-स्पर्श भएर काम-पीडा बढ्यो झन्
बसीरा'को ठाउँमै म त बस्न सकिनँ है ।

१२

इच्छाले हामी खेलौं मुख मुख जोरेर
ममाथि तिमीलाई सुखैमा राखें है ।

१३

लोकले जे भनोस् नगरे यो सुख-काम
अमृत-भोग गरे मलाई सकेजति है

१४

भर्खरकी तरुनी छु पुग्दैन मलाई खान
तिम्रो रूप हेर्न मलाई कहाँ पुग्छ है ।

१५

दया राख्यौ मलाई प्रिया,काम-भोग नवीन
पछिलाई पनि त साँच्नुपर्छ है ।

१६

छोडूँ कसरी मैले प्रेमको हत्या गरीकन
छोडेर जान मलाई मन भएन है ।

१७

बास बसें रातभरि पठाइनौ मलाई
कसरी मन राखी अब म जान सकूँ है ।

१८

जाने कहाँ बसन प्रिय काखमा एकैछिन
घाम झुल्किए पनि त डर छैन है ।

१९

देख्नेछैन कसैले पनि काखमा एकै छिन
नबुझाई मेरो मन किन जाने है ।

२०

इच्छाले खेलिरहौं समय आउनेछैन फेरि
यो समय खेल तिमी मन लागेजति है ।

२१

आउँछन् दूत यमको सभाबीच लैजान
प्रेम भनी कहाँ पर्खन पाउने है ।

२२

जानेको यति हुँ प्रिय नै एक मलाई
छोडी नजाऊ बसन अब यहीं है ।

२३

●

# थाहा पाएछन् सबैले

हजूर म एक भएको थाहा पाएछन् सबैले
ननीका साथीसन्मुख पर्न सकिनँ शर्मले ।
नहुँदा गर्भ मकहाँ सधैं आउनुभएथ्यो
गर्भिणी हुँदा मलाई चटक्कै बिर्सनुभएथ्यो ।

१

जन्मिन्छ छोरा ठानेको मैले जन्मिछ छोरी पो
गरेर हेला त्यो छोरीलाई बाटोमा फ्याँक्नुभो
सबले सोध्न थालेछन् त्यहाँ— बालक कसको यो ।

२

छिमेकी पनि भन्दछन्– 'बाबु नभाऽको बालक'
सुनेर हरे यो मन मेरो रोयो है अत्यन्त ।
सत् धर्म भए बालक यसको कर्म नै हुनेछ
हुनु है पर्‍यो सत् धर्म अब बाबु र बाजेको ।

३

छँदै छ छोरो, छँदै छ छोरी सन्तान भैहाल्यो
तैपनि किन ममाथि हाय सौता नै हाल्नुभो ।
आमा र बाबु छँदै छन् फेरि दाजु र भाइ नै
तैपनि हेला यसरी किन मलाई गर्नुभो ।

४

स्वभाव तिम्रो हेरी नै सकें चरित्रसहित
आमा र छोरी जानू है अब माइतीको घर ।
ओछ्यानै पनि मलाई दिनुभएन लाउन
खुट्टामा तेल लाउन पनि नदिई निकाल्नुभो ।

५

कहाँ म जाऊँ अँधेरी रात बस्छु म यहीं नै
आजको रातभरि त बास मलाई दिनुस् है ।
बालक छँदै पोइल गएँ एकई बारमा
भइछु आमा राम्ररी बैंस फुल्न नै नपाई ।

६

बालक यहीं छोडेर जान्छु लिनुस् है अब त
माग्दछु पार पर्न म जान्छु आमाको शरण ।
लोग्नेको धर्म हुँदैन व्यर्थै कोपिला बिगार्छ
धानको बढी भएको बीऊ सरी म भइछु ।

७

नछोड्नुस् मेरो सहस्र बिन्ती क्षमा म माग्दछु
अबला नारी सम्झेर क्षमा मलाई दिए है ।
नेपालका हुन् छत्रपति श्रीरणबहादुर
रचनाकार माग्दछ क्षमा भएको भूलमा ।

८

●

# हरि हरि मेरो हृदय

हरि हरि मेरो हृदय विधाताले खोसी लगे ।

भर्खरको जोबन यो वहाँले छोडी गए
के गरूँ स्नेह मेरो फाट्यो है ।
बसेथें स्नेहमा दुवै सकिनँ मर्न वहाँसँग
मेरो स्वामी वैकुण्ठ लगे है ।

१

गहना दिइराखे, धन दिइराखे
सुखले बस्ने मेरो मन थियो है ।
धन भएको सम्झी धर्ममा वसेथें
उपभोग छुटाएर लगे है ।

२

अबला नारीको मन स्थिर भएन
मैले यहाँ के भूल गरिछु है ।

रोइरहें रात-दिन, मन मेरो रहेन

कसैले मेरो मन राखिदिएन है ।

३

ऋतुको वेला भयो, कामको पीडा बढ्यो

धर्ममा स्नेह फाट्यो है ।

नारी म पुरुषहीन स्थिर गर्न सकिनँ मन

मैले यहाँ के भूल गरिछु है ।

४

वस्त्रलाई दुःख भयो, विपत् आकाशबाट खस्यो

कसैले राखिदिएन मेरो मन है ।

शरण कसको लिने नारीजाति अबलाले

विधाताले दिए मलाई दुःख है ।

५

तन मन सुम्पी पूर्वको आर्जन पुरुष

ती पुरुषलाई नै भजेर बसूँ है ।

ज्ञानी नारीजन पुरुषसँगै मर्छन्

सुगति पाउँछिन् ती नारीले है ।

६

(काम हरि दिगम्बरमुनि ?) तिथि भयो

वैशाख मासको कृष्ण पक्ष है ।

भजूँ अबलाले शरण कसको लिऊँ

नरमुनि सिंहप्रताप है ।

७

●

# सिलु तीर्थ

हाय हाय प्रभु स्वामी कहाँ जानुभयो
धन्दा किन मेरी प्रिया काम खोज्न गएँ ।
हामी दुई बस्यौं प्रभु सल्लाह केही छैन
कहाँ जानुभयो प्रभु कहाँ जानुभयो

१

सिलु तीर्थ स्नान गर्दा अति पुण्य हुन्छ
सिलु तीर्थ जानलाई साथी खोज्न गएँ ।
साथी खोज्ने किन प्रभु हामी दुई जाऔं
जोडा जोडी सिलु जाँदा अति पुण्य हुन्छ ।

२

हामी दुई जनालाई जोशी देखाउनुपर्छ
जोशी देखाइसकें मैले बिछोड हुन्छ भन्छ ।
जोशी किन प्रभु स्वामी हामी दुई जाऔं
हामी दुई स्नान गर्दा अति पुण्य हुन्छ ।

३

हुठी नहोऊ प्रिया मेरी बिछोड हाम्रो हुन्छ
बोध किन हुन्नौ तिमी बिछोड पक्का हुन्छ ।
आफ्नो घरबाट उठी धर्मथली बसें
धर्मथली पुगी हेर्दा प्रिया पछि देखें ।

४

हत्ते गर्ने किन यसो बिछोड पक्का हुन्छ
सँगै बस्छु सँगै जान्छु बिछोड कसो हुन्छ ।
धर्मथलीबाट उठी पाँचमाने बास
पाँचमाने पुगी हेर्दा प्रिया पछि देखें ।

५

आऊँ नभन मेरी प्रिया घर फर्की जाऊ
सँगै जान्छु सँगै बस्छु कसो बिछोड हुन्छ ?
पाँचमानेबाट उठी जैफलपौवा बास
जैफलपौवा पुगी हेर्दा प्रिया पछि देखें ।

६

'आऊँ' नभन मेरी प्रिया घर फर्की जाऊ
सँगै जान्छु सँगै बस्छु बिछोड कसो हुन्छ ?
जैफलपौवाबाट उठी रानीपौवा बास
रानीपौवा पुगी हेर्दा प्रिया पछि देखें ।

७

'आऊँ' नभन मेरी प्रिया घर फर्की जाऊ
सँगै जान्छु सँगै बस्छु बिछोड़ कसो हुन्छ ?

रानीपौवा छोडी चतुरालीपौवा बास
चतुरालीपौवा पुगी हेर्दा प्रिया पछि देखें ।

८

'आऊँ' नभन मेरी प्रिया घर फर्की जाऊ
सँगै जान्छु सँगै बस्छु कसो बिछोड हुन्छ ?
चतुरालीपौवा छोडी नुवाकोटबेंसी
नुवाकोट पुगी हेर्दा प्रियापछि देखें ।

९

नुवाकोटबेंसी छोडी थैबुफेदी बास
थैबुफेदी पुगी हेर्दा प्रियापछि देखें ।
'आऊँ' नभन मेरी प्रिया घर फर्की जाऊ
सँगै जान्छु सँगै बस्छु कसो बिछोड हुन्छ ?

१०

थैबुफेदीबाट उठी भिमलपाक बास
भिमलपाक पुगी हेर्दा प्रियापछि देखें ।
'आऊँ' नभन मेरी प्रिया घर फर्की जाऊ
सँगै जान्छु सँगै बस्छु कसो बिछोड हुन्छ ?

११

भिमलपाकबाट उठी धुंच्याबेसी बास
धुंच्याबेसी पुग्दाखेरि प्रभु-शीर ढुक्यो ।
धन्दा किन प्रभु स्वामी सुर्ता लिने किन ।
सँगै बस्छु सँगै जान्छु कसो बिछोड हुन्छ ?

१२

धुंच्यावेसीबाट उठी लकडीविना वास
बोध मैले गरें कति बिछोड हाम्रो हुन्छ ?
लकडीविनाबाट उठो सिलु तीर्थं पुगे
सिलु तीर्थ स्नान गर्दा राज-आज्ञा आयो ।

१३

'नआऊ' भन्दा भन्दै प्रिया हठी भई गइन्
डोली चढ्न नपाएकी सुपालमा बसिन् ।
सुपालमा बस्दा सुनें स्वामी रोए हाय
तिम्रो स्वामी न्वाको कहाँ कुकुर न्वाको हेर ।

१४

कुकुर न्वाको होइन राजा मेरा स्वामी रोए
'नरोऊ है' मेरा स्वामी म जतिकै पाइन्छ ।
राजाले दिए ताडीफूल स्वामीलाई दिन्छु
'नरोऊ है' मेरा स्वामी म जतिकै पाइन्छ ।

१५

तिमी जस्ती पाउन मैले तप गर्नुपर्छ
हिमालमा तपै गरूँ तिमी जस्ती कहाँ ?
सुपालमा बसी गएँ फूलै-फूलको वन
प्रभु स्वामी छोडीकन राजासित गएँ ।

१६

लोग्ने-स्वास्नी सिलु गई एकलो हाय भएँ
रोक्ता रोक्तै आइन् प्रिया हठी भई गइन् ।

सिलु तीर्थबाट उठी भिमलपाक पुगें
भिमलपाक पुग्दाखेरी प्रिया मैले सम्झें ।

१७

भिमलपाकबाट उठी नुवाकोटबेंसी
कहाँ गई भेटूँ अब प्रिया मैले सम्झें ।
नुवाकोटबेसी छोडी रानीपौवा फर्कें
रानीपौवाबाट उठी पाँचमाने बसें ।

१८

पाँचमानेबाट उठी पशुपति आएँ
नीलकण्ठ महादेव-दर्शन मैले गरें ।
पशुपतिबाट फर्की आफ्नो घर पुगें
घर पुग्दा आमा-बाबु गाली गर्न थाले ।

१९

दाजु-भाइ सबै मेरो हेला गर्न लागे
आफ्नू घर किन बसूँ जोगी भई जाऊँ
जोगी-भेष लिई मैले खोजी खोजी घुमें
राज्यभरि घुमी हेर्दा तिमी जस्ती कहाँ ?

२०

बाह्र वर्षसम्म मैले तप-व्रत गरूँ
बाह्र वर्ष तपै गरूँ तिमी जस्ती कहाँ ?
धन्दा किन लिने रानी सुर्ता किन लिने
धेरै धेरै कन्या-केटी सेवा गर्न दिन्छु ।

२१

हीरा-मोती जुहार-पन्ना गहना-वस्त्र दिन्छु ।
जाऔं रानी तिमी-हामी त्रिपासा क्यै खेलौं ।
यस्तो कुरा छाडी राजा मेरो बिन्ती माने
चतुर्मास–व्रत बसी सांगे गर्नुपर्छ ।

२२

चतुर्मास–व्रतलाई के के चाहिन्छ भन
घिउ,चाकु,सखर,दूध सबै मलाई चाहिन्छ ।
प्रजागण सबैलाई भोजन दिनुपर्छ
राज्यभरिका जोगीलाई सामेल गर्नुपर्छ ।

२३

जोगी प्रजा सबै आए मेरा स्वामी छैन
स्नान गरी बस्दाखेरि प्रभु स्वामी आए ।
धन्दा लिने किन स्वामी सुर्ता लिने किन
जोगिनीको भेष लिई छलीकन आउँछु ।

२४

हाय हाय कन्या-केटी चर्पी जानुपर्‍यो
चर्पी जाने किन रानी झारी राख्न ल्याऔं ।
यस्तो राम्रो कोठाबीच फोहर किन गरूँ
चर्पी जान भनी रानी कोठा छोडी गइन् ।

२५

एकान्तमा कतै गई वस्त्र सबै छोडिन्
विभूतिले आँग दली गेरू-वस्त्र ओढिन् ।
जोगिनीको भेष लिई छलीकन गइन्
आइसकें स्वामी अब धन्दा किन लिने ।

२६

दुवै सँगै किन जाऔं स्वामी अघि लागून्
बीचबाट घुमी आई भेट्छु स्वामीलाई ।
धन्य धन्य मेरो कर्म स्वामी फेरि पाएँ
यहाँ बसौं किन स्वामी आफ्नो घर जाऔं ।

२७

## त्रितारामण्डल

हादे– ज्ञानकी देवी शारदा देवी पहिले सम्झन्छु
बुनाइ–कला सुशिक्षा-ज्ञानखातिर नुहुन्छु
ए साथी, जाऔं अक्षर सिकौं छिटो है जाऔंन ।

१

इनारबाट झिकेर पानी गर्दछु स्नान है
इनारको पानी तानेर लिंदा खरी त खसेछ
भएन लिन, भएन लिन ।

२

हँसिली राम्री ठस्यौली मन भएकी मयजु
बचन भाषा पहिले पाऊँ त्यो खरी झिक्नेछु
हँसिलो राम्रो ठस्यौली मन भएका हे भाजु
इनारबाट झिकेर दिए खरी त्यो मलाई
प्रथम मेरो शृंगार सत्य दिनेछु सुम्पेर ।

३

वचन दिएँ नलिई मैले बाबु र आमाको
मैले के गर्ने ?
ठस्यौली मन भएका भाजु समान प्राणको
सुपारी लाखा ल्याएछ तर मलाई दुःख भो ।

४

हादे– हँसिली राम्री ठस्यौली मन भएको मयजु
गयो कि खेर वचन तिम्रो इनारमा गरेको ?
हँसिलो राम्रो ठस्यौली मन भएका हे प्राण
दुपट्टा राम्रो ल्याएछ तर दुःख भो मलाई ।

५

हँसिली राम्री ठस्यौली मन भएकी मयजु
गयो कि खेर वचन भाषा इनारमा गरेको ?
हँसिलो राम्रो ठस्यौली मन भएका प्रीतम
मलाई लिन ल्याएछ डोली अब के गर्ने लौ ?
हँसिली राम्री ठस्यौली मन भएकी हे प्रिया
गयो कि खेर वचन भाषा इनारमा गरेको ?

६

हादे– हँसिलो राम्रो ठस्यौली मन भएका प्रीतम
इनारको मेरो वचन भाषा व्यर्थको भयो है ।
त्यो मूल बाटो डोली नै ल्याए बारीको बाटो छ
आजको दिनभरि छ बाँकी समय छँदै छ ।

७

म जान लागें नदको देश जोगीको भेष ली
आउनुस् माग्न, आउनुस् माग्न मकहाँ भिक्षा है ।

दुओर दायाँ त्वादेवा बायाँ राखेको सुदिन
अनेक जोशी ब्राह्मणद्वारा पाएको लगन
सुवेला पारी म जान लागें है ।

८

हे मेरा डोले, भरिया मेरा कुरा क्यै सुनन
पर्दछ जानु पहाडी लामो बाटो त्यो काटेर
जाऔं छरितो भएर ।

हे मेरा डोले, भरिया मेरा थामन क्यै छिन
मलाई लाग्यो रिंगटा फेरि हुँदै छ बेचैन
त्यो सूर्य-चन्द्र रूखको मुनि क्यै छिन बसौंन ।

९

हादे– दुपट्टा मेरो उठाई हेर्दा देखिछु अचम्म
ती मेरा प्रभु रूखको माथि रोएर बसेको
उहाँको आँसु खसेर मेरो छातीमा पऱ्यो नि
पीर मलाई लाग्यो नि ।

१०

हे मेरा डोले, भरिया मेरा कुरा क्यै सुनन
पर्दछ जानु पहाडी लामो बाटो त्यो काटेर
जाऔं छरितो भएर ।
हे मेरी सासू, आउनुस् तल बलि पन्छाउन ।

११

दुओर दायाँ त्वादेवा बायाँ बालेको त्यो दिन
अनेक जोशी ब्राह्मणद्वारा देखाई लगन
मलाई अब सुवेला पारी स्वयम्बर गर्लान् है ।

हादे– सहभोज सिध्याईवरी रातको बीचमा
कोठामा देखें, म सुत्न खोज्दा– विरूप स्वरूप ।

१२

विरूप पति देखेर भएँ लाजले भुतुक्क
बिहानै उठी बढार्न खोजें कुचो त्यो लिएर
लाएर कुचो म माथि जाँदा देखिछु जोगी त्यो
आएछन् जोगी है ।

१३

हादे– हे मेरा दाता, दाता हे मेरा देऊन भिक्षा है ।
हे मेरा जोगी, जोगी हे मेरा लेऊन भिक्षा यो ।

१४

हादे– हे मेरा दाता लिन्न है भिक्षा तिम्रो त्यो हातको
आएकी नयाँ दुलही हात पाएमा संतोष ।

हे मेरी नानी, दुलही मेरी बुझिदन कुरा क्यै
जोगीले आज अद्भुत कुरा किन हो गरेको ?
आएकी नयाँ दुलही हात पाएमा सुभिक्षा
भन्दछु सन्तोष ।

१५

हे मेरी सासू, छैन कि कतै फलैंचा शीतल
गरम भई आएको जोगी होओस्न शीतल
बारीको ढोका खोलेर जानू फलैंचा त्यहीं छ
फलैंचा शीतल ।

१६

बारीको ढोका खोलेर भित्र  गएर  हेर्छु त
ती मेरा प्रभु रूखको मुनि  मरेका  रहेछन्

हादे– कतिको शर्म, कतिको दुःख लाजले  भुतुक्क
छिमेकीलाई देखाऊँ मैले  कसरी  मुख यो
म भएँ  लाजले  भुतुक्क ।
उहाँको छुरी छातीमा रोपी  त्याग्दछु शरीर
छोड्दछु  शरीर ।

१७

हादे– हे मेरी आमा, दुलही मेरी गएकी  कहाँ हो
विचार  छैन कि ?
वारीको ढोका खोलेर गइन् शीतल  फलैंचा
त्यहीं गएर हेर है ।

१८

हादे– बारीको ढोका खोलेर हेर्दा हाय के देखें  यो
रूखको मुनि दुइटा लास  सँगै  नै  रहेको
कतिको शर्म, कतिको दुःख  लाजले भुतुक्क
छिमेकीलाई देखाऊँ मैले  कसरी  मुख यो
म भएँ  लाजले  भुतुक्क ।
त्यही छुरीलाई छातीमा रोपी त्याग्दछु शरीर

१९

भएको के हो गएका कोही  आएनन्  फर्केर
म हेर्न जान्छु है ।

हादे– बारीको ढोका खोलेर हेर्दा भएँ म अचम्म
ती तीनै जना मरेको देखें रूखको फेदमा
कतिको शर्म, कतिको दु:ख लाजले भुतुक्क
छिमेकीलाई देखाऊँ मैले कसरी मुख यो
म भएँ दु:खले भुतुक्क ।

२०

हादे– ती तीनै जना नभमा भए त्रितारामण्डल
आकाशबीच दिएको हेर शोभा त्यो उज्ज्वल
शोभा त्रितारामण्डल

२१

## बाबुको मन कल्पेर रोयो

बाबुको मन कल्पेर रोयो
दीयो लिई खोज्न गयो
कालिमाटीको त्यो खाल्डोमा ।

पन्छाई माटो खोस्रेर हेर्दा
मेरो छोराको पाइतला देखें
कालिमाटीको त्यो खाल्डोमा ।

मेरो छोराको मुख अब
कहाँ गई हेर्न सकूँ भनी
बूढो रोयो छाती पिटी-पिटीकन ।

बाबुले मसान बनायो नौ घरको
नौ कप्टेरा दाउरा ल्यायो
आमा-बाबु रोए छाती पिटी-पिटीकन ।

सानीमाले छ्वासल फाल्न लगाई
बहिनीहरूले लावा छर्न लगाई
दाजु-भाइ पछि पछि रुवाएर
मेरो छोरो भाग्यमानी भइगयो ।

मसानको धूवाँ आइरहेछ
आँखामा आँसु झरिरहेछ
मेरो छोरो भाग्यमानी भइगयो ।

म पापीले दुःख पाएँ
म पापी कहाँ गई मरूँ
म पापी छाती पिटी रुनुपर्‍यो
कालिमाटीको त्यो खाल्डोमा ।

●

# मलाई लेऊ तिमी, म लिन्छु तिमीलाई

मलाई लेऊ तिमी, म लिन्छु तिमीलाई ।

अदुवा नयाँ, भटमास कालो, हातभरि पोलुवा मासु
टिकिन बजी चिउरा राखी मलाई खवाउन हे तरुनी !
मलाई लेऊ तिमी, म लिन्छु तिमीलाई ।

१

लिपेर रातो भुई, हरियो लपेस ओछ्याई
सेतो मीठो चिउरा राखी मलाई खवाऊन हे तरुनी !
मलाई लेऊ तिमी, म लिन्छु तिमीलाई ।

२

हामी दुवैले खाइसक्यौं रसबस गरौं अब
माया मात्र नदेखाऊ यसरी मलाई हे तरुनी !
मलाई लेऊ तिमी, म लिन्छु तिमीलाई ।

३

●

## योमढो चोसिलो

योमढी चोसिलो भिन्नपट्टि कालो
दिने चाहिं तरुनी नदिने त—
बूढी बूढी !

चार माने मानो, दुई माने मानो
नकली नै मानो होस् कुसी देऊ ।

पीठो पिंधेको देख्यौं, खाएको मात्र देखेनौं
रोटी पकाएको पनि देख्यौं ।
मुख चुठेको देख्यौं, खाएको मात्र देखेनौं
भाँडा माझेको पनि देख्यौं ।

दिए भने मीठो, नदिए तीतो
दिने चाहिं तरुनी, नदिने त कंजूस—
बूढी बूढी !

तिमीलाई पनि जाडो छ
हामीलाई पनि जाडो छ
पर्खेर बस्न गाह्रो छ
चाँडै दिई पठाए है।

## कुलदेवी बन्धक राखूँ

उधारो लिई पसल थापूँ
कुलदेवी बन्धक राखूँ
उसको बाबु कराउन आए
खापाले च्यापिदिऊँ ।

सुमेरु आदिभवानी रसिया
सुमेरु आदिभवानी हो ।

प्यांगभरी चिउरा राखूँ
हाँसको फुल डुइटा बनाईछोडूँ
ज्वाइँ आए भने मैले
खापैले च्यापिदिऊँ ।
सुमेरु आदिभवानी०

तोरीसागे माला क्याालमा छ
त्यही तरुनी मलाई चाहिन्छ

त्यो तरुनी नभईकन भात खान्न
हाइ हो, त्यो तरुनी नभईकन भातै खान्नँ ।
सुमेरु आदिभवानी०

देशभरिका डांग्रे कुकुर नोलले हानी मारिए
त्यसै वेलादेखि हाय, चोरले दुःख दिए
हाइ हो, त्यसै वेलादेखि चोरले दुःख दिए ।
सुमेरु आदिभवानी०

राजाको होरी रिसायौ कि तरुनी
अबीर अलिकति राख्न हुन्न कि ?
हाइ हो, अबीर अलिकति राख्न हुन्न कि ?
सुमेरु आदिभवानी०

तुकी ठुलठुला छन् तरुनी,
सुन कति लाग्यो नि
बडेजुले बनाएको मलाई थाहा नाईं ?
सुमेरु आदिभवानी०

भँगेराले धान खायो धपाइदेऊन तरुनी
सँगसँगै बसेर पनि हेर्नै हुन्न कि ?
सुमेरु आदिभवानी०

## परदेश पठाई

परदेश पठाई यहाँ म कति बसूँ हजूर
नारीजाति एकलै म कति रहूँ पर्खेर ।

टाढा भए भने स्वामी मन जान्छ अरूमाथि
पापमा फसुँला म मन गए अरूमाथि

हजूरको नहेरी रूप खाएतुल्य हुन्न नि
आँखाको नहेरी झलक मन यो रहन्न नि ।

दिन-रात नाम लिई पुकारी बस्छु हजूर
धर्म हुनेछैन स्वामी नारीलाई रुवाएर ।

धन हेरी म आइनँ, रूप हेरी आइनँ
हिजोको माया पिरती स्वामी भनी आएँ ।

कहाँ जाऊँ कहाँ बसूँ जाने ठाउँ छैन स्वामी
कसको मुख हेरीकन बसूँ मैले मन थामी ।

दिन-रात धन्दा सुर्ता सुकिसक्यो शरीर
किन दिने दुःख मलाई बिन्ती गर्छु हजूर ।

तन मन धन सबै दिइसक भएजति
अरू छैन कुनै बाँकी मेरो स्वामी बिन्ती यति ।

नसम्झूँ म कसरी हजूरको रूप-जोबन
बियोग हुन्छ भनीकन पहिले मैले ठानिनँ ।

सुनिदिनुपर्‍यो स्वामी, यो अज्ञानीको पुकार
करुणा हुनुपर्‍यो नारीजाति सम्झेर ।

●

## बाह्र वर्षसम्म जलवृष्टि नभएर

बाह्र वर्षसम्म जलवृष्टि नभई
नरेन्द्रदेव राजाले विचार गरे
गुरु बन्धुदत्त सारथी गरीकन
कामनी-क्षेत्रमा गई जोगध्यान गरे ।

१

हरिसिद्धि, हयम्ग्रीव, लुतिकुनी, लुताबाहा
भैरवले सहित स्वागत गरी नेपाल पुगे
सुमश्री बिहारमा लोकनाथको मूर्ति बनाई
स्वर्ग मर्त्य पातालको भावनारथजात्रा गरे ।

२

लगाऔं प्रभुमा भक्तको सब तन मन
लोकनाथ भक्तलाई हेरिदेऊ करुणाले
चरण ब्रह्माको आनन-शून्य चन्द्र
श्री त्रिभुवनवीरविक्रम महाराज रे ।

●

## हरि म कहाँ जाऊँ ?

हरि म कहाँ जाऊँ ?
एक दिन होइन दुई दिन
कलह भयो रात-दिन
सुबिस्ता भएन चार दिन

गिर्खा राखी खोला बाँधे
मुनिबाट पानी छिरे
के होला खास्टोले छेके ?
हरि म कहाँ जाऊँ ?

रूप-रंग चम्पा-फूल
सुबासिलो चम्पा-फूल
बासना भने सुकन्दराज-फूल
हरि म कहाँ जाऊँ ?

खानलाई अन्न छैन
लगाउन वस्त्र छैन
बस्नलाई बास कतै छैन
हरि म कहाँ जाऊँ ?

नेपालका हुन् छत्र-पति
पृथ्वीवीरविक्रम - देव
प्रजालाई गरे प्रतिपाल
हरि म कहाँ जाऊँ ?

●

# कहाँ जाऊँ कहाँ बसूँ

कहाँ जाऊँ ? कहाँ बसूँ जाने ठाउँ छैन प्रभु
यसरी रस-रंग बनाईराख्यौ, दैव !
राम म कहाँ जाऊँ ?

कहाँ जानुहुन्छ भाजु ? स्वास्नी डाक्न जान लागें
तिम्री स्वास्नी गइसकिन् अरूसँग, दैव
राम म कहाँ जाऊँ ?

घर जति राजाले लिए, खेत जति बाढीले लग्यो
जाने-बस्ने छैन ठाऊँ मलाई आज, दैव
राम म कहाँ जाऊँ ?

स्वास्नी छैन मेरी छिमेकीले हेला गरे
कहाँ गई राखूँ मन जाने ठाउँ छैन, दैव
राम म कहाँ जाऊँ ?

## यस्तो रस-रंग छोडो

यस्तो रस-रंग छोडी हरि, कहाँ जाऊँ म कहाँ ?

वालक-कालमा रस थाहा पाइनँ
दिन-रात खेलो विताएँ ।
१

बैंस मेरो चढ्यो अब, सहन मैले सकिनँ
दुःख भयो साथीविना ।
२

बाबुले दिन्छन् भनी हर्ष लिई बसें म
आमा-वावुको विचार भएन ।
३

कर्मको लेखाले हुनु-पर्‍यो जोगिनी म
नरोके आमा-वाबुले मलाई ।
४

पूर्व-जन्ममा धर्म मैले गरिनँ
पापिनीले दुःख पाएँ अब ।

५

दिन-रात मैले सपनी नै देखें
रातभर रोई बसें म ।

६

नभएको होइन खान-लाउन मलाई
प्रीति नभएर दुःख ।

७

कहाँ जाऊँ कहाँ वसूँ बस्ने ठाउँ छैन प्रभु
पुरुषको प्रीति एउटा छैन ।

८

नेपालका छत्रपति पृथ्वीवीरविक्रम
गरून् प्रतिपाल प्रजालाई अब ।

९

## दुःख मैले कसलाई पोखूँ

सासूको ढंग हेर्न सकिनँ मैले
दु:ख मेरो कसलाई पोखूँ– हरि हरि ।

सौताको माया छैन,
स्वामीको दया भएन,
सुबिस्ता मैले देखिनँ– हरि हरि ।

पिरती मेरो बाल-कालको
सकिनँ छोड्न पिरती मेरो
मायालाग्दो पिरती तिम्रो
रहँदा आफ्नै घरमा– हरि हरि ।

नदिई थाहा आमालाई पनि
तिमी नै भनी आएँ म
अनर्थ भयो नछोडे यसरी– हरि हरि ।

●

## सामान्य भजन

प्रेम, रस एवं व्यथा, वियोगमा आफूलाई सधैं अल्झाई राख्नुको सट्टा मानसिक सान्त्वना, पारमार्थिक सुधारको माध्यम ईश्वरको आराधना देवी-देवताको भजन मानेपछि यसमा स्वभावत: विकास आउँछ । उपत्यकाका उर्वरा भूमिले थोरै परिश्रमद्वारा अन्नको प्रचुरता प्रदान गरेपछि यसका निवासीले आफ्नू अधिकांश समय भजन-कीर्तनद्वारा देवी-देवताको जात्रा-पर्व एवं चाड आदिको आयोजना गरी आफ्नू जीवनमा सरसता ल्याउन प्रयत्न गर्न थाले । त्यसैले नेवारी संस्कृतिमा प्रत्येक चाड-पर्व देवी-देवतासँग सम्बन्धित छन् ।

अरु भन्न सकिन्छ— त्यस समय यहाँ जति मानिस थिए; उति नै देवी-देवताहरू । दुई-चार देवी-देवता नभएका घरहरू त्यसै वेला यहाँ शायद विरलै होलान् । यस अवस्थामा दाफा-भजनको साथै विभिन्न मण्डल एवं भजन-घरहरूको पनि स्वभावत: विकास हुन्छ । यसैको स्मृतिको रूपमा अझै पनि प्राय: प्रत्येक स्थानमा भजन-मण्डल एवं भजन-घरहरू छँदै छन् । खुला

प्रार्थनाको अतिरिक्त सम्बन्धित देवी-देवताका रोचक एवं लोक-कथा वौद्ध-अवदानमा वर्णित घटना आदि नै यी भजन-गीतका आधार-स्रोत मान्न सकिन्छन् । खोजिएमा यस्ता लोक-भजनहरू र देवी-देवतासँग सम्बन्धित लोक-कथाहरू पनि भरमार पाउन सकिन्छन् ।

## हे सखी श्यामजीको दर्शन होला कि ?

हे सखी श्यामजीको दर्शन होला कि ?
भोलि बिहान उठेर हेरि मात्र रहूँ कि ?

सधैंको ठाउँमा हुने गोठालो त्यो गयो कि ?
हे सखी तिमी गई हेर्नुपर्ने थियो नि ।

कहाँ जाऊँ,कहाँ खोजूँ, ठाउँ एक होइन नि
मथुरा गईकन लुकि मात्र रह्यो कि ?

कदम-रूखमाथि वाँसुरी बजाई बस्यो कि ?
हरे तिमी गईकन हेरी आउन हुन्न कि ?

अनाथ छु भनेर म थाहा केही भएन कि
मलाई त्यसै फ्याँकेर धर्म नै होला कि ?

●

## श्री गुह्येश्वरी माता

गुह्येश्वरी माता ईश्वरी
करुण नयनले २ हेरे अनाथ सम्झी ईश्वरी ।

चन्द्र-किरण समान रूपको तेज-ज्योति
मुण्ड-माला गतिलो २ अति चण्डी भक्ति ईश्वरी ।

गर्न सकिनँ प्रभु भक्ति सदा मेरो बिन्ती
नदिए दुःख २ अति प्रभु शरणागति ।

असह्य म अति यहाँ सही बसें मति
खराब दुर्दिन २ नासून् सहस्र भक्ति ।

जगतमा छैन प्रभुसमान अरू सदाशिव मेरो बिन्ती
रचयिताको निर २ गति कृपा गरून् भूपति ।

●

## त्रिरत्नको सेवा गरौं, हे लोकजन !

गरौं हे लोकजन, त्रिरत्नको चरणमा
सेवा भक्ति राखेर रे ।

नदी झैं छ नरको आयु-बल
स्थिर नभई बहेको रे
नरको जुनीमा धर्म नसम्झे
पछि नर्कमा परिन्छ रे ।
१

मोहको वश परी मायामा अल्झी
आँखाले देखेनौं धर्म रे
नसम्झे परलोक, नगरे परहित
आउँछ मरणको काल रे ।
२

बालकाल खेलमा रम्छ, बेहोशमा बैंस बित्छ
बुढेसकाल अल्सीमा डुब्छ रे

छोडी जानु छ सबै, आउँदेन कुनै साथ
प्रीत, जन, धन-सम्पत्ति रे ।

३

गिरिवर गोपुच्छ प्रवेश धर्मधातु
ज्योतिस्वरूप स्वयंभू रे
प्रभुको सेवा गरे हुनेछैन दुर्गति
लगिन्छ सुखावती लोक रे ।

४

स्वर्ग–नर्क जान यही लोकमा
लोकजन, गरौं है सेबा रे
गरौं यही लोकमा, हेरौं परलोक
गरौं हे लोकजन सेवा रे ।

५

समय छँदै नचेते बैंसले दिनेछैन
बैस क्षणमा जान्छ रे
फेरि पाउन दुर्लभ मनुष्य–जुनी
गरौं हे लोकजन, सेवा रे ।

६

मन परेको लानु छैन, इच्छा भएसम्म बस्नु छैन
लगिन्छ यमद्वार रे
यम–दूतलाई रोक्न सक्तैन आमाबाबुले
जन, धन-सम्पतिले रोक्न सक्तैन रे ।

७

●

## जय नृत्यनाथ

जय जय जय नृत्यनाथ महेश्वर
अन्यन्त सुन्दर औतार ।

अर्धं शरीर कर्पूर, अर्ध सिन्दूर रंग
दायाँ, बायाँ गणेश-कुमार जय नृत्यनाथ ।

नन्दी, भृङ्गी प्रमुखसहित हर्षित
नाची सहर्ष आए प्रभु ।

(भक्तलाई उठाई अति) कामना पूर्ण गरी
नृपति जगतजयले भने– जय नृत्यनाथ ।

●

## नृत्यनाथ महेश्वर

नृत्यनाथ महे (पलेमा) श्वर सुन्दर (चो)
आँखा लोलाईकन (अस्तरा) मुसुमुसु हाँसेर (जति)

हिसीपूर्ण स्वरूप (पलेमा) रंग कर्पूर (चो)
नन्दी भृङ्गी, दुवै छेऊ (अस्तरा) राखी नाचेर (जति)

त्रिशूल समाई (पलेमा) डमरु बजाएर (चो)
बाघ-छाला कटिमा (अस्तरा) बेह्ली मसानमा बसेर (जति)

नाग–आभूषण (पलेमा) ले शोभित भएर (चो)
जटामा गंगाधारी (अस्तरा) चन्द्रमा लाएर (जति)

# भगवान् पर्वत-शिखरमा

भगवान्-पर्वत शिखरमा आउनुभयो आनन्दले

प्रथम भूमि सब जलमय भइरह्यो
कमलमा ज्योतिरूप दर्शन दिए प्रभु ।

बुद्ध, धर्म, संघ तीनै एक भईकन
विश्वरूप दर्शन दिए मलाई प्रभु ।

तेत्तीस कोटी देवगण पूजा गर्न धाए
ब्रह्मा, विष्णु, महेश्वरसहित सब आए ।

श्रीमहामञ्जुश्रीले चन्द्रहास खड्ग समाई
जल सबै निकाली ज्योतिरूप पूजा गरे ।

चन्द्रदेव राजा आई, ज्योतिरूप छोपिदिए
शान्तिकर नाम भयो पञ्चपुरी बनाइदिए ।

नेपालका छत्रपति सुरेन्द्रविक्रम धनी
प्रार्थकको मनोरथ पूर्ण गरिदेऊ प्रभु ।

●

## मोह गरिन् वाह रे वाह

निर्बुद्धि नारीजाति हाय,
पैह्लो मिलनमा अत्यन्त सुन्दर
मोह गरिन् वाह रे वाह,
भनी मुसुक्क हाँसें रे ।

अब छोड्ने बिचार भो तेरो छोडेरै के अब ?
जाने कहाँ अब वाह रे वाह !
कहाँ जाने कहाँ वस्ने, बस्ने ठाउँ छैन रे ।

हेर प्रभु, स्वपुरुष हेरी सुन्दर कसरी ?
समय छँदै रे वाह रे वाह !
चेत्न सकिनस् बेलैमा अब के हुन्छ छोडी रे ।

मनलाई स्वतन्त्र छोडिस् तैंले, अब यो अफसोस किन ?
नरपति रे वाह रे वाह
नरपति प्रताप मल्लको सुवचन रे ।

●

## विश्व-शान्ति गरिदेऊन्

श्रीअन्नपूर्णा विश्व-शान्ति गरिदेऊन्

विश्व–शान्तिको कामना लिईकन
लक्षहोम, कन्या-पूजा अन्न-दान पाठ पनि गऱ्यौं ।
श्री अन्नपूर्णा०

एक हजार पचहत्तर संबत् भाद्र-शुक्ल शनि अष्टमी
नेपालका छत्रपति श्री महेन्द्रबीरदेव ।
श्रीअन्नपूर्णा०

पाप-दुःख प्रार्थकको नाश गर्नुपऱ्यो
विश्व-भ्रान्ति हटी सुख शान्ति हुनुपऱ्यो ।
श्रीअन्नपूर्णा०

●

## लोकनाथ गरे चाँडै उद्धार

लोकनाथ गरन चाँडै उद्धार ।

अरुणको रंग छ शिरमा अभिताभ
अभय वरदान दिएर
हे अनाथका नाथ, लिएका अमोघ पाश
आएँ म आशा लिएर ।

कनक-मुकुट कनक-केतकीफूल
कानमा-कनक कुण्डल
करुणामय हे करुणा-निधान
हेरिदेऊ करुणाले हे नाथ ।

मणिमय हारले समुन्नत
हे उज्ज्वल रूप-रंग
मछिन्द्रनाथ मनका स्वरूप
पूर्ण गरे मेरो मनोरथ ।

सुन्दर सुलक्षण शोभायमान
सुखावती भुवनको नाथ
हरिदेऊ प्रभु सुदृष्टि राखी
देऊ मुक्ति मलाई नाथ ।

ललितापुरीमा विराजमान
सहर्ष चढेर रथ
रस-गज-रत्न सालका धनी
श्रीसुरेन्द्रबिक्रम शाहदेव ।

●

## राधिका कृष्णजीको अंग

हेर हेर रसिक समय वसन्त
चराचुरंगी सब भए उन्मत्त ।

वृन्दावनमा फुले अनेक रंग
राधिका-रति भयो कृष्णजीको अंग ।
हेर हेर०

फुलेल, अबीर, चुवा, चन्दन
सयपत्री, धवन, कस्तूरीले छोपे त्रिभुबन (?)
हेर हेर०

ऋद्धिलक्ष्मी देवी भन्छिन्– सुन हे गोविन्द
भूपालेन्द्र ठाकुरको गरून् आनन्द ।
हेर हेर०

## सुनको ढोका पाँच वटा खापा

श्री जय राजेन्द्रविक्रम शाह् गर्ने वेला भयो गरीब-उद्धार ।

सुनको ढोका, पाँचौटा खापा
सुनको छानामा सिंह् राखेर
खड्गसहित अति सुन्दर ।

त्यो शीप कसले दिए ?
त्यो जतन कसले दिए ?
रणजीत महाराजले दिए ।

दुईतिर दुइटा शिला-खम्वा
पाँचौटा सिक्रीले ताम्र लगाएर
झुण्डयाई ठूलो घण्टा सुन्दर ।

ठाऊँ-ठाऊँमा मुसी राखी
मुसीले नै छाना सजाएर
झुण्डयाई ठूलो घण्टा सुन्दर ।

पंचबली पूजा भयो
हाँस बोका काटेर
प्रजालाई महादया गरेर ।

भएजति दाफा डाकी
भएजति नाच नचाएर
लिए प्रत्येकले पुरस्कार ।

दुईतिर दुई राजा
वीचमा भवानी राखेर
पहिले प्रभुको भजन गरौं नुहेर ।

●

## हेर्ने वेला भयो गंगामाई

हेर्ने वेला भयो करुण आँखाले गंगामाई ।

पाप-दुःख नासेर मेरो धर्मदेह
यो शरीर गरे निर्मल गंगामाई
१

प्रभु-भक्ति छुट्यो, सहयोग दिए अब
भक्ति रसमा बग्न पाऊँ बिस्तारै गंगामाई
२

पूर्व जुनीको पापले नसुनेको देखिसकें
व्यर्थमा गयो यो मेरो जन्म गंगामाई
३

समय छँदा चेतना आएन अब चेतेर के ?
आकाशबाट खसेसरी भएँ गंगामाई
४

मनमा लागेको चोट अरूले देख्ने होइन
सकेसम्म मैले सही बसें गंगामाई ।

५

सम्झना आउँछ– 'सूर्य-वंशी' धुर्धुर रुन्छ मन
पाप लाग्यो मलाई आज गंगामाई ।

६

आशा कसको लिने तलेजुको आशा लिएँ
साह्रै दुःख भोगी बसें गंगामाई ।

७

शरण कहाँ जाऊँ ? कहीं छैन जाने
मलाई दुःख अति भयो गंगामाई ।

८

एउटै छोरो त्यो पनि मलाई भएन
कानोको लौरो खोसे, कर्म भएन गंगामाई ।

९

विरहले आएँ म काशी मणिकर्णिका स्थान
हात जोडी मैले स्वर्गवास मागें गंगामाई ।

१०

हातले जल छोई, हिक्काले ताल दिई
पीडा वेगले भनें (पोखें) गंगामाई ।

११

नेपालका छत्रपति श्री रणजीत मल्ल
गर्नुपर्‍यो थिती-रीती स्थिर गंगामाई ।

१२

तलेजु-भैरवको कृपा नभएसम्म
मलाई देऊ काशीवास गंगामाई ।

१३

●

## हारती माता

धन्य परमेश्वरी हारती माता
अद्‌भुत स्वरूपमा आगमन भयो हे माता ।

गोसिंग–पर्वत धर्मको स्थान
आगमन भयो भक्तका जननी हे माता ।

भाजु, मैजु, सहित आनन्दसाथ माता
मुसुमुसु हाँसेर आगमन भयो हे माता ।

धन भाजु, धन मैजु, वासि भाजु वासि मैजु,
जिलं भाजुसहित आगमन भयो हे माता ।

प्रभुको स्वरूपको कति म बयान गरूँ
जगत्‌मा छैन प्रभु समान कोही हे माता ।

रचयिताको पाप-दुःख-विनाशिका माता
जगत्‌संसारका रक्षिका भएकी हे माता ।

●

## दया राखे हरि

दया राखे हरि, तिमीले यसरी नछोडन ।

वसन्तको वेला सिर्सिरी चल्यो पवन
मन मैले राख्न सकिनँ
वंशीको शब्द वन्यो कोकिल-धून
सुनी सुनी रोयो मेरो मन
विह्वल भयो यो तन ।

पलाउँदै आयो मेरो वृक्ष-जोवन
थाम्न सकिन्न यो मन
विह्वल भएँ व्यर्थै लाग्यो ओइलिन
पर्दछु तिम्रै चरण
तिमीबिनु निष्फल जीवन ।

तिम्रो मुख हुन्छ फलफली सपना
जान वाहिर खोज्छ मन
विरह बढ्यो मैले सकिनँ सहन
मूर्छामा खोज्छु सुत्न यो मन
दया राखे मान गर्छु मन मन ।

# प्राण नदेखी हरि

प्राण नदेखी हरि, मन मेरो रहेन ।

अन्धकार छायो विरह-बादल
गर्ज्यो मेघ मनभित्र आज ।
प्राण नदेखी हरि०

आँखामा आँसु भेल बगाई बस्छु
मुर्छामा बिजुली झैं झलक देख्छु ।
प्राण नदेखी हरि०

पाऊँ दर्शन कसरी ? गरे इच्छा पूरण
मान गर्छु मन मन सुम्पेर धनजन ।
प्राण नदेखी हरि०

## हे हरि, देऊ दर्शन

कृपा राखेर हे हरि, देऊ दर्शन
सम्झी सम्झी व्याकुल भएँ प्रीतम ।

आँसुमै मेरो बितिगयो जोबन
कस्तो कर्म रहेछ बित्यो आसैमा जीवन ।

लख चौरासी खोजिसकें घुमीकन
पाउन मैले कतै सकिनँ दर्शन ।

नीद छैन मेरो खान लाउने मन
विरहको तापले सुकिसक्यो तन ।

कामले दियो पलपल पीडन
पूर्ण गरे मन मान गर्छु प्रीतम ।

●

# हे हरि, मैले मन राख्न सकिनँ

छाएछ मेघ अँध्यारो गरी यी सारा भुवन
जाने म कहाँ हे हरि मैले मन राख्न सकिनँ।

१

अँध्यारो गरी छोपेछ सारा विह्वल मन यो
कसरी भेटूँ हे प्रभु मैले मनमा पीर भो।

२

उछ्वास लामो बढेर आयो सन्ताप दुःखको
आँसूको भेल आँखामा आयो मनमा पीडा भो।

३

बिजुली सरी झलक्क देख्छु प्रभुको मुहार
अचेत हुन्छु, मूर्छामा पर्छु मन भो अधीर।

४

हरेर लेऊ यो पीडा मेरो दर्शन दिएर
आँसू यो पुछे सन्मान गर्छु प्रीतम भनेर।

५

●

## कसरी भेटूँ म नन्दलाल

अब कसरी भेटूँ म नन्दलाल
जान लाग्यो जोवन मेरो व्यर्थै रे
जोवन भारी भयो कसरी सहूँ म
रहेन स्थिर मन, जान लाग्यो प्राण रे ।

घडी-घडी छिन-छिन मूर्छा भएँ म
उनीबिना रात-दिन कसरी काटूँ रे
खान-लाउन रुची छैन मन मेरो रहेन
रातभर नीद छैन विरही भएँ रे

नगरे है दाजु-भाइ गर्जगुमान रे
अझै उनीसँग मिलन आशा रे
अब कसरी भेटूँ म नन्दलाल
जान लाग्यो मेरो जोवन व्यर्थै रे ।

●

## आयो धून बाँसुरीको

आयो धून बाँसुरीको जमुनामा कृष्णको
पानी लिन निहू थापी बाहिर म आएँ रे ।

काम–कुरा सबै छोडे गाली देलिन् आमाले
मलाई शर्म लाग्छ अति, थाहा पाउलान् अरूले ।

रात–दिन मेरो मन तिमीमाथि जान्छ रे
भारी भई जोवन यो व्यर्थैमा गयो रे ।

आउँदैन औसर यो बियाँलो गर्ने किन रे ?
मलाई जान बेर भयो अलि हेर यता रे ।

अरू छैन तिमी जोडा मेरो पुकार यति रे
निराश नपारी मलाई प्रीति दिई पठाऊ रे ।

●

## कुन जतनले भेटूँ कृष्ण ?

कुन जतनले भेटूँ म कृष्ण ?

झलझली सम्झीकन रुन खोज्छ यो मन
कामको दहन मेरो यो जोवन ।
कुन जतनले०

मन राख्न सकिनँ विरह बढीकन
हतास भएँ म प्रभुको शरण पाउन ।
कुन जतनले०

मेरो इच्छा यो मन कहिले होला पूरण ?
दिएँ मैले तन-मन, धन-जन, प्राण ।
कुन जतनले०

इच्छा मेरो मनमन पाउन दर्शन
कति घुम्ने म लख चौरासी भुवन ?
कुन जतनले०

●

## हेर ! हेर ! कृष्णजीको चाला

हेर ! हेर ! कृष्णजीको चाला
शरमले भएँ म बेहाल ।

लोक सबले देखे के भने मन मन
किन हात समाती तानेको होला ?
दु:ख नदेऊ मलाई, छोडिदेऊन अब
हरे ! मैले कसरी यो सहन सकुँला
रस-रंगमा तिम्रो अतृप्ति किन होला ?
हेर ! हेर ! कृष्णजीको चाला

जमुनाको तीर हेरिरहिन् सखीजन
हरे ! किन यसरी नशर्माएको होला
बिन्ती गर्छु म दिई तन–मन
कति गर्छौ मलाई बेहाल ?
देऊन त्यो मेरो रत्नको माला
हेर ! हेर ! कृष्णजीको चाला ।

●

## श्री बुद्ध भगवान् लुम्बिनी बन

जय गुरु नमो श्रीबुद्ध भगवान् लुम्बिनी बन आए ।

ब्रह्माले कुचो लाए, सरस्वतीले वस्त्र ओछ्याइन्
अलकापुरीका राजा कुवेरले धन–द्रव्य बिछ्याए ।

वायुदेवले ध्वजा फहराए, अग्निदेवले धूप सल्काए
नागराजा वरुणले जल–धारा बर्साए ।

नारायणले शंख फुके, महादेवले डम्मरु बजाए
यमराजले दण्ड समाई अघि जाने बाटो देखाए ।

इन्द्रले छत्र ओढाए, भिक्षु जतिले चमर डोलाए ।
सब आनन्दमा मग्न भए, आकाशबाट फूल बर्साए ।

नैर्ऋत्य ज्ञानाकर सबै लोकसहित प्रसन्न भए
शेषनागमाथि चढी हर्षले सबको पूजा लिए ।

बाण ? (बन) गज-रत्न साल श्रीसुरेन्द्रविक्रम महाराज
गुरुको शरणमा छु अनाथ जन रचनाकार ।

●

## मनकामना देवी

मनकामना देवी तारिणी गुणकी खानी ।

तेज भयो सूर्य ज्योतिस्वरूप पार्वती
स्वामी भए हे माई, स्वामी भए श्री पशुपति ।

भगवती राखून् गति-मति दर्शन देऊ अलिकति
नाश गर्ने हे माई, नाश गर्ने पाप लोक जति ।

संसारमा छैन म जति वारंवार दुःखी अति
जाने ठाउँ छैन हे माई, जाने ठाउँ छैन मलाई कत्ति ।

अनाथको छैन गति विवेकले हेरिदेऊ यति
तीनै लोकमा हे माई, तीनै लोकमा छैन तिमी जति ।

श्री पृथिवीनारायण नेपालका छत्र-पति
सुख देऊ हे माई, सुख देऊ प्रजालाई अलिकति ।

## कपटी मायाले बाँध्यो हे शिव

अगाडि मैले भूल गरें प्रभुको पाऊ समाइनँ
सुखको रसमा परें
लोभमा डुबें, स्थिर हुन खोजें
अब अफशोच गरें ।
१

हितले मैले भनें अगाडि चेतना भएन
यमको पासो देखिनँ
अनाडी मनले पछिको देखेन
खराब बाटो समाएँ ।
२

पुराण आदि तन्त्र-मन्त्र जप-तप
सबै मैले पढें
समय दिनौं अब धमिलो हुँदै गयो
प्रभुको नाम लिन सकिनँ ।
३

अनेक निधिले नरका पति
महीन्द्र मल्लले भने
क्षमा माग्छु म पापी
कृष्णको दासले भने ।
४

•

## दोमन नगरे है

दोमन नगरे है रे सखी तिमी ।

अरूको समान हुन्न आफ्नो कर्म
हिजोको फल मात्र हुन्छ
कर्मले दिएको ठाउँ सुख-दु:ख सही बस
पछि धर्म भाग्यमानी हुन्छ ।
१

सुख भनी नहाँसे दु:ख भनी नरोए
सुख-दु:ख सँगसँगै आउँछ
धनीसित गएर भाग्यमानी हुन्नौ हेर
पछि घोर नरकमा परिन्छ ।
२

(लोटा मात्र लिएर पानी कहाँ गाग्रीभर
लोटाभरि मात्र पानी हुन्छ)

अरूको कुरा सुनी दोमन नगरे सखी
अरूले त कहाँ सुख दिन्छ ?

३

यताउति घुमेर फिरिंदैन आफ्नो कर्म
ढोका मात्र तिमीलाई घुम्छ
आमा-बाबुले जन्म दिए, कर्म आफ्नै साथ आयो
सुख-दु:ख सँगसँगै आउँछ ।

४

अरूको भाग्य हेरीकन अभागिनी नभने
देखेको कहाँ मात्र पाइन्छ ?
हिजोको पापले आज यति दु:ख भयो
अब त चेतना लिनुपर्छ ।

५

लाज र शर्म मान्नुपर्छ मनुष्य-जन्ममा
पशुलाई लाज शर्म कहाँ ?
पशु एक मनले नासिन्छ, मानिस दुई मनले
दोमन नगरे तिमी है ।

६

शत्रुको कुरा सुनी पर-आशा नलिए
दोमन नगरन है सखी,
आफूलाई आफैंले हित गरे सबले हाई भन्छन्
पापी मन नरकमा पर्ला ।

७

आफ्नू मन नसह्माले लोकले निन्दा गर्छन्
पछि पछुताउनुपर्ला
संसारका कुरा मैले कति भनूँ तिमीलाई
आफ्नू मन सह्माल्न खोज ।

८

नरजुनी पछि कहाँ ? चित्त राखे शुद्ध यहाँ
अरू छैन मेरो तिमी समान
अरूको समान हुन्न आफ्नू कर्म
हिजोको फल मात्र हुन्छ ।

९

●

# हे मन राजा

हे मन राजा, भएका धनी यो सारा शरीरको
बालक दश साथमा छन् ती समान चोरको ।
निराशा, आशा दुइटी रानी उनकै साथमा
नलिए हेरी बालक, नारी अहंकार मनमा ।
राज्य-विनाश हुनेछ ।

नौ औटा ढोका शत्रुको बाटो आउने द्वार ती
सुबुद्धि एक कुबुद्धि अर्की रानी छन् दुइटी ।
सुनेर कुरा कुबुद्धिको त्यो अहंकार नगर
छ है अनित्य शरीर ।

पाँचौटा काजी साथमा लिई वसे रीति र थीतिमा
चन्द्र र सूर्य साक्षी हुन् दुई सम्झ है मनमा ।
धर्म र पाप रणमा जान नरको खजाना
लान क्यै सकिन्न ।

रात र दिन दुइटा दूत यमले छाडको
अहंकार राजा विरुद्ध लड्ने मनसुवा गरेको।
ती ढोका सब गरेर बन्द शहर पस्नेछन्
राज्य-विनाश गर्नेछन्।

स्त्री, पुत्र, काजी, मन्त्री ती सब अवश्य भाग्नेछन्
हुनेछ राज्य वैरीको फेरि बाध्नेछन्, थुन्नेछ।
कर्मको फल एउटा खालि तिमीलाई मिल्नेछ
फुकाई डोरी कसले छोड्नेछ ?

रचयिताको विचार हो है लिएको मनमै
मनको राजा साथमा लाग्ने धर्म र पाप नै।
सुबुद्धि-कुरो सुनेर तिमी सत्कर्म गरे है
छैन तिमीले लाने क्यै।

## समय जान्छ मन पछुताउँछ

समय जान्छ, मन पछुताउँछ रे
फेरि नर-जुनी पाउन सकिन्न रे ।

बाल-बच्चा परिवार ब्याधाको जाल रे
जालमा नपरे तिमी हरिको नाम लेऊ रे ।

धन-सम्पति सबै राखेको ठाउँ बस्छन् रे
लिई आएको शरीर यो छोडी जानुपर्छ रे ।

गंगा, जमुना, सरस्वती स्नान गर्न जाऊँ रे
ज्योतिर्लिंग पशुपतिको दर्शन गरूँ रे ।

अभयानन्दले भने– सुन साधु सन्त रे
चेतना लिई अब हरिको नाम लेऊ रे ।

## आरति श्रीघन

आरति श्रीघन सम्मुख गरौं
निशिदिन दश बल नाम लेऔं ।

अक्षत, चन्दन, पुष्प र धूप
रस, दीपसहित पूजन गरौं ।

ताल, मृदंग, ढोलक बजाऔं
डमरु प्रभृति शंख बजाऔं ।

पर्वत, सागर, रत्न मिलाऔं
कर जोरी हामी बिन्ती गरौं ।

आरति श्रीघन–सम्मुख गरौं
निशि-दिन दशबल नाम लेऔं ।

●

## पिरतीले आरति गरौं

भगवान् पिरतीले आरति गरौं ।

मनमा भक्ति राखी भगवान्को नाम लिई
बत्ती बालेर आरति गरौं ।
भगवान् पिरतीले०

भुक्ति-मुक्ति पद पाउन, सकेको बिन्ती गरी
सकल–कार्य पूर्ण गरौं ।
भगवान् पिरतीले०

सुगन्धित धूप दिई, परम ब्रह्मको ध्यान गरी
सक्दो जप, तप हामी गरौं ।
भगवान् पिरतीले आरति०

श्री जय राजेन्द्रविक्रम शाहदेव
नृपतिले यो सुवचन बोले ।
भगवान् पिरतीले आरति०

●

## जप-तप-समान पिरतीले आरति गरूँ

आरति गरूँ आफ्नै मन दीयो बालेर हरि ! हरि !
भाव-भक्ति छैन के हुन्छ शुचि भएर !

माछाको जूठो पानीले स्नान गरेर हरि ! हरि !
मूसाको जूठो अक्षताले के हुन्छ पूजा गरेर!

बाछाको जूठो दूध शरीरमा खन्याएर हरि ! हरि!
मौरीको जूठो मह शरीरमा लगाएर ।

शिला घोटी चन्दन निधारमा लगाएर हरि ! हरि!
भँमराको जूठो फूल शिरमा लगाएर ।

दान-पुण्य गर्ने मेरो दाम के छ र ? हरि ! हरि!
जप-तप गरूँ म के विधि पुऱ्याएर !

जप-तपसमान पिरती राखेर हरि ! हरि !
राखून् है कृष्णजीले मोक्ष दिएर ।

●

## सामान्य सामाजिक

सामयिक अप्रतिवन्धित सामान्य सामाजिक लोक-गीतले पनि प्रेम, व्यथा, वियोग-वेदनाको अतिरिक्त सामाजिक देन तथा अभिशापलाई अँगालेको हामी पाउन सक्छौं। यी सामान्य लोक-गीतका प्रेम, व्यथा एवं अभिशापले हामीलाई एक छिन भए पनि स्तम्भित तुल्याइदिन्छ । प्रकृतिका अनुपम देन कसैको निम्ति उपहार भए कसैका निम्ति उपहास पनि हुन सक्छ। उसको व्यथालाई कन् जगाइदिन्छ र बैचेन तुल्याइदिन्छ। एउटी वियोगी प्रेमिका अभिव्यक्त गर्छिन्— व्यथालाई ओकली, पोडालाई निल्दै । उनको व्यथाभिव्यक्तिले हामीलाई उकुस-मुकुस तुल्याउँछ । कृत्रिम शाब्दिक अलंकाररहित सरल किन्तु मार्मिक— हामीलाई उनीप्रति सहानुभूति जगाइदिन्छ। विपरीत प्रकृतिको निष्ठुरता ।

महारानी विजयालक्ष्मी आदि जीवित इतिहास हो, अनि समाजको एउटा ठूलो अभिशाप पनि। समाजमा घटिरहने कुनै देन अथवा अभिशापलाई समयले विर्सन सक्तैन र जीवित राख्न खोज्छ, यस्ता मानव-कम्जोरीलाई समयले बराबर गाइरहन्छ

आफ्नू आँसु बगाउँदै– व्यथाको रूपमा, अभिशापको रूपमा । यी अभिशापहरू त्यसैले पछिसम्म पनि गाइ नै रहनेछ, जसरी उकुस-मुकुसँसिँदै, छटपटिँदै समयले आजसम्म गाई आएको छ– मानव-कम्जोरीका यी अभिशापहरू ।

●

## कृष्ण, तिमीले बाँसुरी बजाई मन मेरो रहेन

कृष्ण तिमीले बाँसुरी वजाई मन मेरो रहेन ।

चैतमा जाईफूल फुलेर भएँ विरही
मन लाग्यो मलाई आज कल्पेर रुन
वैशाख, चमेली गुलाफ अनेकन
व्याकुल भएँ म सम्झेर प्रीतम ।

१

जेठमा इन्द्रकमल दारिम कुसुम
फुलेर चमेली काम भयो उत्तेजन
असार रोपाइँ इकंधली कुसुम
फुलेर आँखाभरि आँसु आयो प्रीतम ।

२

साउनमास फुलेर सुगन्धराज
सुवासले चंचल भइरह्यो मेरो मन

भाद्र कमल श्वेत नील अनेकन
फुलेर प्रियसँग बस्ने भयो मेरो मन ।

३

आश्विन ज्ञानिटका लुतिसल कुसुम
प्रभुलाई कसरी चढाउन पाऊँ म !
कार्तिक गोदावरी, गुनकेशरी, मखमली
राखेर पूजा गर्ने मेरो भयो मन ।

४

मंसीर सयपत्री पर्वतका कुसुम
फुलेर मन लाग्यो दिन यो जोबन
पूस जमानेमान्द्रो वकुल–कुसुम
प्रभुविना व्यर्थै गयो तन यो मन ।

५

माघ कुन्द–पुष्प दूवो पलास अनेकन
फुलेर भयो मेरो पूर्ण यो जोबन
फागुन गुराँस सुबासिलो धवन
सम्झेर व्याकुल भएँ पाउन दर्शन ।

६

बाह्रै मास ऋतु छभरि बनै
प्रियको आशामा व्यर्थै गयो तन
दया राखी प्रीतम, इच्छापूर्ण गरन
सकेको गर्छु मैले प्रभुको सन्मान ।

७

●

# विधवा तुल्यायो

प्रीतम मेरा ह्लासामा गए यो मन रुवाई
कसरी बसूँ हे प्रिय, अब मन यो रसाई ।

बिहानीपख कौसीमा जान्छु, देख्छु म हिमाल,
सफेद हिउँ देखेर मन कल्पन्छ विह्वल ।

म खान लाग्दा केटा र केटी मलाई सोद्धछन्
भनन मुमा, ती हाम्रा बुबा कहाँ गै बसेछन् ।

शब्द यो सुनी अधीर हुन्छ मन यो कल्पन्छ
कोट्याई घाउ मनको भित्र किन यी सोध्दछन् ?

ह्लासाबाटै आएर पत्र मन नै रसायो
त्यो पत्र मैले खोलेर हेरें– विधवा तुल्यायो ।

कोठामा पस्छु खाटको सेतो तन्ना त्यो देखेर
यो मन मेरो अधीर हुन्छ रात नै रोएर ।

## सुन हे श्रीभैरवनाथ

सुन हे श्रीभैरवनाथ तिमी छौ सहाय
म दु:खीलाई को छ र आज तिमी नै सिवाय ?

गरिनँ सेवा मैले के सक्दो कुलको व्यवहार
नगरीकन नहुने मैले आफ्नो कुलाचार

बालक आफ्ना नांगै छन्, छैनन् लुगा क्यै आँगमा
मनमा किन अभिमान उठ्छ यो दु:खी जुनीमा ।

बाँचेर पनि निर्धनी मर्छै आजको समय
जतन गरें अनेक मैले लागेन उपाय ।

वनाऔं भनी अनेक गरें उपाय हजार
देख्दछु मैले घरको भित्र यमको जंजाल ।

घरमा खाने-लाउने छैन वेदना अपार
दु:खको कुरा कसैमा पोख्दा लिंदैन पत्यार ।

दैवकै आशा लिएर बसें पीर नै निलेर
सेवकमाथि भएन कति दैवको विचार ।

गर्दछु बिन्ती प्रार्थकलाई गरन उद्धार
उतारिदेऊ मलाई आज दुःखको समुद्र ।

●

## पोइल जाने बयलीकी छोरी रे

पोइल गई स्वामी लिने बयलीकी छोरी रे
हादे यसो-उसो आफैले लिई खानु छैन रे
हादे मेरो वचन रे राम २ सुन मैयाँ त्यो पुरुष
त्यागिदेऊ मैयाँ पछि पछुताउ होला रे ।

१

आफ्नू घर बसेको वेला धेरै दुःख भोगें रे
चिउरा-डाली बोकी अरूको काममा गएँ रे
हादे छ्वाली-छाता रे बोकी यताउति काममा गएँ
रे मुमा कति दुःख भोगी यहाँ बसें रे ।

२

छोरो मेरो छैन तिमी छोरी एउटीकै आशा रे
बूढा-बूढो रुवाएर जानु राम्रो के होला रे ?
त्यो पुरुष रे छोडिदिए सन्दूस पीला वाख्रा भैंसी
घर-बारी, धन-गहना सबै तिमीलाई नै दिन्छु रे ।

३

यो के कुरा गरेको रे मुमा दैवको खेल रे
तिमीले दिएर पाउने होइन लेखेजति पाउने रे
मेरो कर्ममा रे नलेखेको तिमीले दिए पनि
हुने होइन वहाँसँग भएजति नै मलाई पुग्छ रे।

४

यो के कुरा गरेको रे मैयाँ मेरो वचन सुन रे
तिम्रो रूपसुहाउने गरी मैले कन्यादान दिन्छु रे
लोकमा रे गिल्ला नहुने गरी आफू समानमा
दिइपठाउँछु त्यो पुरुष छोडिदेऊ रे ।

५

यो के कुरा गरेको रे मुमा दैवको खेल रे
वहाँविना यो मेरो प्राण रहँदैन रे
यो जन्ममा रे पुरुष मलाई उहाँविना
अरू छैन मेरो कर्म भोग गरी बसूँ रे

६

एकलो जीउ भएसम्म खान लाउन देलान् रे
जोबनको रस भएसम्म खुशी पारी राख्छन् रे
खेतीमा लाग्न रे परेन भनी खुशी नहोऊ
(पछि फ्याँकेको पात झैं बर्बाद होउली रे ?)

७

यो के कुरा गरेको रे मुमा वचन भाषा भयो रे
मअघि वहाँ जानुभए मेरो सती जाने वचन रे

वहाँको अघि रे म गएँ भने मेरो अस्थि
गंगामा सेलाउने सत्य भाषा भयो रे ।

८

यस्तो हो भने मैयाँ वयलीकी छोरी रे
अबदेखिको दुःख-सुख त्यागी जानू रे
घर त थाहा छ रे दैलो थाहा पाइनँ भनी
रे मैयाँ मूल दैलो ढोगेर जानू रे ।

९

सुवासिलो बुकुवा लगाई श्रीखण्ड लगाउँछु रे
गुलाफको अत्तर, कस्तूरी, चमेलीको तेल लगाउँछु रे
लालधरीको (?) रे पंलग चनवा मखमलको
ओछ्यान लगाई वहाँ र म अँगाली सुतूँ रे ।

१०

रछानमा खसेकी बुहारी कैं तिमी होउली रे
खान हुन्न, निल्न हुन्न बलसीको माछा रे
गर्भ रहेपछि रे वाक्क मान्छन्, निहुँ खोजी हिंड्छन्
(चैंटो त आफै हिंडेर आउँदैन रे ?

११

यो के कुरा गरेको मुमा कर्मको खेल रे
वहाँबिना यो प्राण राख्तिनँ मैले रे
तिमी म रे भएसम्म यो दैलोमा आउन पुगे पनि
वहाँसँग जान्छु भनी गई रे ।

१२

मुमा भन्न पुग्यो रे मैयाँ बुबा भन्न पुग्यो रे
मेरो छोरीले भनेको मानिन गणेश-स्थान जान्छु रे
ढुंगेधाराको रे हतुव (?) ॐ मेरी छोरीको हितचित्त
मिलोस् गणेशसँग पुकार गर्छु रे ।

१३

अरू हेरी आइनँ अरूको कुरा सुनिनँ रे
यहाँसँग मेरो सत्य वचन पूरा गर्न आएँ रे
दैवको रे संजोगले पुरुष यहाँ नै पाएँ
अवलाको मन पूरा गरिदिए रे ।

१४

हाय हाय प्राणप्यारी सुन्दरी आनन्दमा बस रे
खान-लाउन, बस्न तिम्रो इच्छा भएजस्तो गर रे
जोबनको रे रस भएसम्म रतिरस
आफ्नू खुशीमा राखिछोडचो रे

१५

वर्ष-दुई-वर्ष हुँदैआयो आफू खुशीमा बसी रे
गर्भिणी भएर सुत्केरी भई बसी रे
सासूले रे खान दिइनन् पुरुषले छोडीदिए
आफ्नू घर जानू भनी भने रे ।

१६

लोग्नेले नै मलाई भनेनन् अरू के चाहियो रे
मेरी आमाको वचन नसुनेको पाप लाग्यो रे
वारि होइन रे राम २ वारि होइन पारि होइन
नदीबीच परें आज म कसको शरण जाऊँ रे ।

१७

## ख्याली (प्रेमरस एवं व्यंग्य)

'ख्याली'बाट सम्बोधित प्रेमरस एवं व्यंग्यका विभिन्न पक्षहरूले पनि व्यतीत समाजका घटना, छटपटीको जीवित याद दिलाउन खोज्छन् । ख्यालीको उत्पत्ति ख्याल-ठट्टा हो । प्रेम ख्याल-ठट्टाबाट पनि प्रारम्भ हुन्छ र समाज अथवा व्यक्तिविशेषको आलोचना पनि ख्याल-ठट्टाबाट मार्मिक हुन्छ । त्यसैले नेवारी संस्कृतिमा ख्यालीको पनि आफ्नै पनको इतिहास छ । वाघ गर्जनु कला होइन, किन्तु विभिन्न अभिशापलाई सहज, सरल एवं नरमी-पनाले छेड हानी अरूको हृदय छुन सक्नु नै एउटा कला हो । ख्यालीले हाम्रो कानलाई मिठास, हृदयमा उत्साह, आँखामा सरसताको अतिरिक्त मस्तिष्कमा मधुर कल्पना प्रदान गरिदिन्छ । भरिलो जोबनमा उसका आन्तरिक व्यथाहरू छचल्किन्छन् ख्याली-रूपमा – कोठाभित्र तान चलाइरहेको अथवा आँगनमा बसी चर्खा चलाइरहेकै वेलामा पनि । फेरि दिनभरिको परिश्रम-पछि साँझ आफ्नो घर फर्कँदा पनि बाटोभर सबै हाँस-खेल गरी फर्कन्छन् – ख्यालीको रूपमा ।

अरू समयको अतिरिक्त 'ख्याली'को आफ्नै खास समय पनि छ– गाईजात्रा। समाज अथवा व्यक्तिविशेषको त्यस समय त्रुटि अंकित गर्दै व्यंग्य गरिन्छन्। प्रस्तुत ख्यालीमा प्रेमरसका व्यथाहरू एकातिर छचल्किएका छन् भने अर्कातिर विभिन्न अभिशापप्रति व्यंग्य, तर लयदार बिलकुल कलात्मक रूपमा।

●

## प्रभुबिनु के छ उपाय ?

दुःख मेरो कति पोखूँ हे प्राण !
प्रभुबिनु के छ उपाय ?

अवला म अति नारी सम्झिन्छन् भूषण
(कल्पिन्छ तर पीडाले मेरो मन !)

नारी जाति दुर्गति युक्ति अधोगति
आफैले ल्यायो (दुःख विपत्ति)

कमल-पात लिई क र-जल
छर्किराखें आफ्नो यो शरीर ।

विषले पीडा बढ्यो मन शीतल भएन
चण्डाल कामको दया कत्ति भएन ।

कामले बिपत्ति दियो उचित अहित भयो
मेरो मनमा अति संताप बढ्यो ।

नरेन्द्रलक्ष्मी प्रभु जोगनरेन्द्रले भने
केही समय धीरज गरी बसे ।

•

## म कहाँ गई भेटूँ

मन राखी भने सखी धन्य उपाय
ती पुरुष-मुख-दर्शन कसोरी पाउने ?

समय वसन्त ऋतु मनमा उदास
यस्तो समयमा वहाँ परदेश-वास ।

भँवरा कराउँदै आए चमेली-फूलमा
कोकिल-स्वर सुन्न मनले सकिनँ ।

यताउति वसन्ती (?) फूल फुलेको देखेर
दिनौं सुकेर गयो मेरो शरीर ।

सिर्सिरी हावाले शरीर बिषसम पोल्यो
धेरै के भनूँ सखी, चन्द्रमा नै असह्य भयो ।

रचिका (?) लक्ष्मीका स्वामी पार्थिवेन्द्रले भने
(वहाँलाई अव म कहाँ गई भेटूँ ?)

●

## प्रेमी मेरो छैन नि

नगरन प्रिय अनर्थ मलाई ।

जाईको माला गाँस्छु फूल टिपी बारीमा
त्यो माला कसलाई दिऊँ ? प्रेमी मेरो छैन नि ।
नगरन प्रिय०

फुल्यो अत्तर गुलाफ काँढाको झाँगमा
टिप्ने छैन, लाउने छैन व्यर्थै झरी सुक्यो नि ।
नगरन प्रिय०

माछा बस्छ कसरी पानी छैन पोखरीमा !
त्यही माछा सरी अब मन तड्पिरह्यो नि ।
नगरन प्रिय०

यस्तो निष्ठुर होला भनी देखिनँ सपनी
पानी लिने निहूँ थापी तिमीलाई भेटें नि ।
नगरन प्रिय०

●

# हाय-हाय सुन्दरी केटी

हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?

पूर्वीय दोरी रे तरुनीको पूर्वीय दोरी रे
पूर्वीय दोरी रे सजनी पूर्वीय दोरीमुनि रे
मखमलको चोली थाहा पाइनँ रे
सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?
हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ।

१

टीका त नफाटेको (?) रे तरुनीको टीका त नफाटेको रे
टीका त नफाटेको रे चुल्ठी-मूठो अघिक रे
कस्तो कपाल केटीको सिंगार रे
सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?
हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ।

२

जुरो चुल्ठी रे तरुनीको जुरो चुल्ठी रे
जुरो चुल्ठी रे तरुनीको नीलकमल दुइटा रे

लवंजिफो फूल भने एउटा रे
सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?
हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?

३

टीका त वाटुलो (?) रे तरुनीको टीका त वाटुलो रे
टीका त बाटुलो रे आँखामा गाजल रे
उसको नकल बताउन सक्तिनँ रे
सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?
हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?

४

बाँकटे चोली रे तरुनीको बाँकटे चोली रे
बाँकटे चोली तरुनीको कपडा त राम्रो रे (?)
चुरी भने चाँदीको कोपिला सुनको रे
सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?
हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?

५

छिटको फरिया रे तरुनीको छिटको फरिया रे
छिटको फरिया तुकिचा गोल रे
मै छु ? चाँदीको कथित तरुनीको रे
सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?
हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?

६

●

# विधवा तुल्यायो

प्रीतम मेरा ल्हासामा गए यो मन रुवाई
कसरी बसूँ हे प्रिय, अब मन यो रसाई ।

बिहानीपख कौसीमा जान्छु, देख्छु म हिमाल,
सफेद हिउँ देखेर मन कल्पन्छ विह्वल ।

म खान लाग्दा केटा र केटी मलाई सोद्धछन्
भनन मुमा, ती हाम्रा बुबा कहाँ गै बसेछन् ।

शब्द यो सुनी अधीर हुन्छ मन यो कल्पन्छ
कोटचाई घाउ मनको भित्र किन यी सोध्दछन् ?

ल्हासाबाटै आएर पत्र मन नै रसायो
त्यो पत्र मैले खोलेर हेरें– विधवा तुल्यायो ।

कोठामा पस्छु खाटको सेतो तन्ना त्यो देखेर
यो मन मेरो अधीर हुन्छ रात नै रोएर ।

## सुन हे श्रीभैरवनाथ

सुन हे श्रीभैरवनाथ तिमी छौ सहाय
म दुःखीलाई को छ र आज तिमी नै सिवाय ?

गरिनँ सेवा मैले के सक्दो कुलको व्यवहार
नगरीकन नहुने मैले आफ्नो कुलाचार

बालक आफ्ना नांगै छन्, छैनन् लुगा क्यै आँगमा
मनमा किन अभिमान उठ्छ यो दुःखी जुनीमा ।

बाँचेर पनि निर्धनी मर्छ आजको समय
जतन गरें अनेक मैले लागेन उपाय ।

बनाऔं भनी अनेक गरें उपाय हजार
देख्दछु मैले घरको भित्र यमको जंजाल ।

घरमा खाने-लाउने छैन वेदना अपार
दुःखको कुरा कसैमा पोख्दा लिंदैन पत्यार ।

दैवकै आशा लिएर बसें पीर नै निलेर
सेवकमाथि भएन कति दैवको विचार ।

गर्दछु बिन्ती प्रार्थकलाई गरन उद्धार
उतारिदेऊ मलाई आज दुःखको समुद्र ।

•

## पोइल जाने बयलीकी छोरी रे

पोइल गई स्वामी लिने बयलीकी छोरी रे
ह्रादे यसो-उसो आफैले लिई खानु छैन रे
ह्रादे मेरो वचन रे राम २ सुन मैयाँ त्यो पुरुष
त्यागिदेऊ मैयाँ पछि पछुताउ होला रे ।

१

आफ्नू घर बसेको वेला धेरै दु:ख भोगें रे
चिउरा-डाली बोकी अरूको काममा गएँ रे
ह्रादे छ्वाली-छाता रे बोकी यताउति काममा गएँ
रे मुमा कति दु:ख भोगी यहाँ बसें रे ।

२

छोरो मेरो छैन तिमी छोरी एउटीकै आशा रे
बूढा-बूढी रुवाएर जानु राम्रो के होला रे ?
त्यो पुरुष रे छोडिदिए सन्दूस पीला बाख्रा भैंसी
घर-बारी, धन-गहना सबै तिमीलाई नै दिन्छु रे ।

३

यो के कुरा गरेको रे मुमा दैवको खेल रे
तिमीले दिएर पाउने होइन लेखेजति पाउने रे
मेरो कर्ममा रे नलेखेको तिमीले दिए पनि
हुने होइन वहाँसँग भएजति नै मलाई पुग्छ रे ।

४

यो के कुरा गरेको रे मैयाँ मेरो वचन सुन रे
तिम्रो रूपसुहाउने गरी मैले कन्यादान दिन्छु रे
लोकमा रे गिल्ला नहुने गरी आफू समानमा
दिइपठाउँछु त्यो पुरुष छोडिदेऊ रे ।

५

यो के कुरा गरेको रे मुमा दैवको खेल रे
वहाँविना यो मेरो प्राण रहँदैन रे
यो जन्ममा रे पुरुष मलाई उहाँविना
अरू छैन मेरो कर्म भोग गरी बसूँ रे

६

एकलो जीउ भएसम्म खान लाउन देलान् रे
जोबनको रस भएसम्म खुशी पारी राख्छन् रे
खेतीमा लाग्न रे परेन भनी खुशी नहोऊ
(पछि फ्याँकेको पात झैं बर्वाद होउली रे ?)

७

यो के कुरा गरेको रे मुमा वचन भाषा भयो रे
मअघि वहाँ जानुभए मेरो सती जाने वचन रे

वहाँको अघि रे म गएँ भने मेरो अस्थि
गंगामा सेलाउने सत्य भाषा भयो रे ।

८

यस्तो हो भने मैयाँ बयलीकी छोरी रे
अबदेखिको दुःख-सुख त्यागी जानू रे
घर त थाहा छ रे दैलो थाहा पाइनँ भनी
रे मैयाँ मूल दैलो ढोगेर जानू रे ।

९

सुवासिलो बुकुवा लगाई श्रीखण्ड लगाउँछु रे
गुलाफको अत्तर, कस्तूरी, चमेलीको तेल लगाउँछु रे
लालधरीको (?) रे पंलग चनवा मखमलको
ओछ्यान लगाई वहाँ र म अँगाली सुतूँ रे ।

१०

रछानमा खसेकी बुहारी कैं तिमी होउली रे
खान हुन्न, निल्न हुन्न बलसीको माछा रे
गर्भ रहेपछि रे वाक्क मान्छन्, निहुँ खोजी हिंड्छन्
(घैंटो त आफैं हिंडेर आउँदैन रे ?

११

यो के कुरा गरेको मुमा कर्मको खेल रे
वहाँविना यो प्राण राख्तिनँ मैले रे
तिमी म रे भएसम्म यो दैलोमा आउन पुगे पनि
वहाँसँग जान्छु भनी गई रे ।

१२

मुमा भन्न पुग्यो रे मैयाँ बुबा भन्न पुग्यो रे
मेरी छोरीले भनेको मानिन गणेश-स्थान जान्छु रे
ढुंगेधाराको रे हतुव (?) कैं मेरी छोरीको हितचित्त
मिलोस् गणेशसँग पुकार गर्छु रे ।

१३

अरू हेरी आइनँ अरूको कुरा सुनिनँ रे
यहाँसँग मेरो सत्य वचन पूरा गर्न आएँ रे
दैवको रे संजोगले पुरुष यहाँ नै पाएँ
अबलाको मन पूरा गरिदिए रे ।

१४

हाय हाय प्राणप्यारी सुन्दरी आनन्दमा बस रे
खान-लाउन, बस्न तिम्रो इच्छा भएजस्तो गर रे
जोवनको रे रस भएसम्म रतिरस
आफ्नू खुशीमा राखिछोडचो रे

१५

वर्ष-दुई-वर्ष हुँदैआयो आफू खुशीमा बसी रे
गर्भिणी भएर सुत्केरी भई बसी रे
सासूले रे खान दिइनन् पुरुषले छोडीदिए
आफ्नू घर जानू भनी भने रे ।

१६

लोग्नेले नै मलाई भनेनन् अरू के चाहियो रे
मेरी आमाको वचन नसुनेको पाप लाग्यो रे
वारि होइन रे राम २ वारि होइन पारि होइन
नदीवीच परें आज म कसको शरण जाऊँ रे ।

१७

## ख्याली (प्रेमरस एवं व्यंग्य)

'ख्याली'बाट सम्बोधित प्रेमरस एवं व्यंग्यका विभिन्न पक्षहरूले पनि व्यतीत समाजका घटना, छटपटीको जीवित याद दिलाउन खोज्छन् । ख्यालीको उत्पत्ति ख्याल-ठट्टा हो । प्रेम ख्याल-ठट्टाबाट पनि प्रारम्भ हुन्छ र समाज अथवा व्यक्तिविशेषको आलोचना पनि ख्याल-ठट्टाबाट मार्मिक हुन्छ । त्यसैले नेवारी संस्कृतिमा ख्यालीको पनि आफ्नै पनको इतिहास छ । बाघ गर्जनु कला होइन, किन्तु विभिन्न अभिशापलाई सहज, सरल एवं नरमी-पनाले छेड हानी अरूको हृदय छुन सक्नु नै एउटा कला हो । ख्यालीले हाम्रो कानलाई मिठास, हृदयमा उत्साह, आँखामा सरसताको अतिरिक्त मस्तिष्कमा मधुर कल्पना प्रदान गरिदिन्छ । भरिलो जोबनमा उसका आन्तरिक व्यथाहरू छचल्किन्छन् ख्याली-रूपमा – कोठाभित्र तान चलाइरहेको अथवा आँगनमा बसी चर्खा चलाइरहेकै वेलामा पनि । फेरि दिनभरिको परिश्रम-पछि साँझ आफ्नो घर फर्कदा पनि बाटोभर सबै हाँस-खेल गरी फर्कन्छन् – ख्यालीको रूपमा ।

अरू समयको अतिरिक्त 'ख्याली'को आफ्नै खास समय पनि छ– गाईजात्रा । समाज अथवा व्यक्तिविशेषको त्यस समय त्रुटि अंकित गर्दै व्यंग्य गरिन्छन् । प्रस्तुत ख्यालीमा प्रेमरसका व्यथाहरू एकातिर छचल्किएका छन् भने अर्कातिर विभिन्न अभिशापप्रति व्यंग्य, तर लयदार बिलकुल कलात्मक रूपमा ।

## प्रभुबिनु के छ उपाय ?

दु:ख मेरो कति पोखूँ हे प्राण !
प्रभुबिनु के छ उपाय ?

अबला म अति नारी सम्झिन्छन् भूषण
(कल्पिन्छ तर पीडाले मेरो मन !)

नारी जाति दुर्गति युक्ति अधोगति
आफैले ल्यायो (दु:ख विपत्ति)

कमल-पात लिई क र-जल
छर्किराखें आफ्नो यो शरीर ।

विषले पीडा बढ्यो मन शीतल भएन
चण्डाल कामको दया कत्ति भएन ।

कामले बिपत्ति दियो उचित अहित भयो
मेरो मनमा अति संताप बढ्यो ।

नरेन्द्रलक्ष्मी प्रभु जोगनरेन्द्रले भने
केही समय धीरज गरी बसे ।

●

## म कहाँ गई भेटूँ

मन राखी भने सखी धन्य उपाथ
ती पुरुष-मुख-दर्शन कसोरी पाउने ?

समय वसन्त ऋतु मनमा उदास
यस्तो समयमा वहाँ परदेश-वास ।

भँवरा कराउँदै आए चमेली-फूलमा
कोकिल-स्वर सुन्न मनले सकिनँ ।

यताउति वसन्ती (?) फूल फुलेको देखेर
दिनौं सुकेर गयो मेरो शरीर ।

सिर्सिरी हावाले शरीर बिषसम पोल्यो
धेरै के भनूँ सखी, चन्द्रमा नै असह्य भयो ।

रचिका (?) लक्ष्मीका स्वामी पार्थिवेन्द्रले भने
(वहाँलाई अव म कहाँ गई भेटूँ ?)

●

## प्रेमी मेरो छैन नि

नगरन प्रिय अनर्थ मलाई ।

जाईको माला गाँस्छु फूल टिपी बारीमा
त्यो माला कसलाई दिऊँ ? प्रेमी मेरो छैन नि ।
नगरन प्रिय०

फुल्यो अत्तर गुलाफ काँढाको झाँगमा
टिप्ने छैन, लाउने छैन व्यर्थै झरी सुक्यो नि ।
नगरन प्रिय०

माछा बस्छ कसरी पानी छैन पोखरीमा !
त्यही माछा सरी अब मन तड्पिरह्यो नि ।
नगरन प्रिय०

यस्तो निष्ठुर होला भनी देखिनँ सपनी
पानी लिने निहूँ थापी तिमीलाई भेटें नि ।
नगरन प्रिय०

●

# हाय-हाय सुन्दरी केटी

हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?

पूर्वीय दोरी रे तरुनीको पूर्वीय दोरी रे
पूर्वीय दोरी रे सजनी पूर्वीय दोरीमुनि रे
मखमलको चोली थाहा पाइनँ रे
सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?
हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ।

१

टीका त नफाटेको (?) रे तरुनीको टीका त नफाटेको रे
टीका त नफाटेको रे चुल्ठी-मूठो अधिक रे
कस्तो कपाल केटीको सिंगार रे
सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?
हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ।

२

जुरो चुल्ठी रे तरुनीको जुरो चुल्ठी रे
जुरो चुल्ठी रे तरुनीको नीलकमल दुइटा रे

लवंजिफो फूल भने एउटा रे
सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?
हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?

३

टीका त बाटुलो (?) रे तरुनीको टीका त बाटुलो रे
टीका त बाटुलो रे आँखामा गाजल रे
उसको नकल बताउन सक्तिनँ रे
सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?
हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?

४

बाँकटे चोली रे तरुनीको बाँकटे चोली रे
बाँकटे चोली तरुनीको कपडा त राम्रो रे (?)
चुरी भने चाँदीको कोपिला सुनको रे
सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?
हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?

५

छिटको फरिया रे तरुनीको छिटको फरिया रे
छिटको फरिया तुकिचा गोल रे
मै छु ? चाँदीको कथित तरुनीको रे
सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?
हाय-हाय सुन्दरी केटी तिमीलाई कहाँ गई भेटूँ ?

६

●

## हजूरको भर लिइसकें

हजूरको भर लिइसकें लानुस् मलाई,
सत्य म आउँछु राजा, लानुस् मलाई ।

मायामा अल्झें राजा, प्रीतमा अल्झें,
अति नै हजूरको मायामा अल्झें ।

सुगन्धराज झैं यो रसिलो जोबन,
अमृत रसले भरेको यो मेरो पूर्ण-जीवन ।

हाय-हाय शील-स्वभाव नै राम्रो,
गरूँ बयान कसरी म ? स्वरूपै राम्रो ।

हजूरको भर लिइसकें लानुस् मलाई,
सत्य म आउँछु राजा, लानुस् मलाई ।

●

## बालख पुरुष मलाई किन

फुफु सासू, बालख पुरुष मलाई किन ।

आमा बाबुले दिएको ठाउँ
पुरुष भयो बालख
यो बालख पर्खेर म उत्रिनेछैन
अब म आफैं हेर्न जान्छु ।
१

आफैले हेरी गएको ठाउँ
पुरुष सुत्न आएनन्
मलाई एक्लै कोठामा राखी
आफू सुत्न बाहिर जान्छन् ।
२

ठूलाले भन्न आउने होइनन्
सानाले मलाई आँट्ने होइन

व्यर्थै जानलाग्यो जोबन
कसो गरूँ मैले लौन ।

३

खाइवरि बेलुकीपख म
पेटीमा काम लिन गएँ
पगडी लगाई आएको याद भएन
मन लाग्यो मलाई उसैसँग जान ।

४

एउटा राखी— 'मगथ्याचा ?'
अर्को राखी— 'त्वाक स्वान'
मलाई लैजाऊन् है
रातो डोलीमा राखेर ।

५

नौ हाते कपडा बुनें
तीन पाउ धागो लाग्यो
त्यो खाडी बेच्न जाँदा
नौ पैसा दिई ल्यायो
यो कुरा कसलाई पोखूँ ?

६

सुवर्णको धारामा म
पानी लिन जाँदा खेरी
उडेर गएको चराले बोलेन
चराले पनि मसँग बोलेन ।

७

परेको पानीले भिजिएला भनी
रूखमुनि म ओट लिन पुगें
यो रूख पनि साह्रो होला ठानिनँ
कडा होला मैले जानिनँ ।

८

●

## जीउ छ केही रसिलो जवानी

नाचेझैं गरी ती हिंड्ने जान्ने परकी तरुनी

गुलाफी रंग छालाको रूप आँखा छन् कमल
निधारबीच लाएको टीका क्या राम्रो झलमल ।

दारिम फूल शिरमा, शोभा दिएको चुल्ठीले
नहेरेझैं गरी हेरेर ल्याइन् आँखाको कुनाले ।

घाँटीमा तायः क्या राम्रो हेर चुरी छन् नाडीमा
सुनको राम्रो कोपिला बान्की गहना कानमा ।

लाएकी चोली देखिने गरी आधा नै छाती त्यो
नहिंडेजस्तो अगाडि आए पाइला उनको ।

पातली होची (त्रिभंगी ?) जीउ छ केही रसिलो जवानी छ
मनको कुरो नबुझ्ने मेरो तिमी के तरुनी ।

लस र पस नगरे यसो शरम लाग्छ है
खाएको पान रसले तिम्रो त्यो गाला रंगिएला ।

●

# मेरी आमाले थाहा पाउँछिन्

हादे– छोड असिद्धि नछो छाती मेरी आमाले थहा पाउँछिन्
हादे– सिरक छ खारिलो ओछ्यान ठुसुक्क गह्लाउँछ ।

१

हादे– जीऊ कतै संचो छैन, दूधको चाकलाभरि नै चस्किन्छ
हादे– मसित आउने पुरुष लोसे, नपुग्दै उह्रदा चन्याउँछ ।

२

हादे–धापाखेलकी तरुनी एउटी हिस्सी परेकी छ
हादे–हेरन हेर ती तरुनी, अहा अति नै राम्री छ ।

३

हादे–बाटोमा आएको ठिटो पछि पछि लागेछ
हादे–ती दुष्ट बूढीको मुख भने बाक्‌वाक चलेछ ।

४

हादे–सुपारी दुइटा खानलाई दतिवन गरिछ
हादे–भैंगेराको गिदी ओकली डोली चढी गइछ ।

●

# रसिक चंचल नयन

रसिक चंचल नयन, नानी आऊन यता अलि ।

चन्द्र-मुहारकी चंचली नारी
चुल्ठी त राम्रो रहेछ है अति ।

छीटको फरिया, तिनिखातको चोली
पुलनालचा (?) रहेछ पटुकीमाथि ।

प्रथमको इष्ट देवी, प्यार हृदयकी
अँगाली म्वाईं खान हुने ठीककी ।

रसिलो कोठा छ खाट भने बाँसको
बच्चा-बच्ची नभएसम्म सुत्न ठीककी ।

रसिली तरुनी दुलही रोपाइँकी
चौथो दिनमा ? ख्याल गर्न हुने ठीककी ।

छाँट-काँट परेकी मुहार सुन्दरी
सुतूँ भनी हेर्न जाँदा त पाँचौटा कोठी (?)

●

## तिम्रो सेवा गरें दैव

तिम्रो सेवा गरें दैव, पुरुषविना रे ।

पूजा सबै जोडीकन तिम्रो सेवा गरें रे
यति साह्रो भक्ति गरें पुरुषविना रे ।
तिम्रो सेवा गरें दैव०

१

एक-दुई वर्ष होइन एकलै म बसें रे
पुरुषहीन भनी लोकले भन्ने रे ।
तिम्रो सेवा गरें दैव०

२

लोकले भन्ने वेला मन मेरो रुन्छ रे
नराखे यसरी दैव प्राण बरु लेऊ रे
तिम्रो सेवा गरें दैव०

३

●

## मधुर फूलको वासना सरि

मधुर फूलको वासना सरि भो मेरो मन ।

वियाँलो फुलेको फूलमा भमरा बस्नेछैन
चंचली मनले त चोट खान्छ अनेकन ।

फकाई लग्यो वनमा छोड्यो मलाई किन ?
के गर्ने अबला नारी छलमा परिसकें म ।

रिसाई फर्केथें कसैले मलाई रोकेन
वर्षाको समय बग्छन् नदी धमिलो भैकन ।

महादेवलाई गर्छु कर जोरी बिन्ती मन मन
ती प्रभुसँग छिटो गराइदेऊ मिलन ।

श्रीपशुपति-गुह्येश्वरीको गरौं है दर्शन
श्रीजयवागीश्वरीको गरौं लौ दर्शन ।

अरुण-वरुण रानी माता श्रीवज्रजोगिनी
प्रार्थकको मनोरथ पूरा गरे ठकुरानी ।

●

## वारि होइन पारि होइन

वारि होइन पारि होइन, नदीबीच परें रे
राजनमाया !

तिमी भने पारितिर, म भने वारितिर
स्वरले नपुगेर ताली बजाई डाकें रे
राजनमाया !
वारि होइन पारि होइन०

शिर हेरें ढाँचा अति नकली भई जाने तिमी
दायाँ हातले चिउरा प्याँग काखी च्यापी आउने रे
राजनमाया !
वारि होइन पारि होइन०

नाम लिई डाकूँ भने छिमेकीले सुन्लान् भनी
सिटी बजाई डाकें मैले नहेरी त्यसै गयो रे
राजनमाया !
वारि होइन पारि होइन०

●

## मेरो मन उडाई लाने

मेरो मन उडाई लाने त्यही ठिटो हो आमा ।

पूर्णेको व्रत बसी स्वयंभू दर्शन गर्न गएँ
सिढीतल भेट हुने त्यही ठिटो हो, आमा !

मंगलबारको व्रत बसी, मरु-गणेशको सेवा गरें
खास्टो छेऊ तानी राख्ने त्यही ठिटो हो, आमा !

अष्टमीको व्रत बसी, चोभार गणेश गएँ म
आँखाले इशारा गर्ने त्यही ठिटो हो, आमा !

एउटा खापा खोली राख्यो, अर्को चाहिं लगाइराख्यो
नहेरेझैं हेरिरहने त्यही ठिटो हो, आमा !

# छिरिंग छिरिंग कल्ली बजाई

छिरिंग छिरिंग कल्ली बजाई नकल गरी गयौ रे ज्यान

रसिलो आँखा देखाई मुसुमुसु हाँस्यो रे
मायामा अल्झाई त्यसै छोडी गयो रे ज्यान ।

कति छलछचौ यसरी रत्न, कति छली जान्छचौ रे
मनलाई रुवाई जाने निर्माया भयौ रे
खान-लाउन धन्दा होइन धन्दा तिम्रो भयो ज्यान ।

झलझल सम्झना आई मन रुन खोज्यो रे
सपना देखेसरि विपनामा छैन रे
कर्ममा लेखेको मिटेर जाने होइन ज्यान ।

कति चोटि भनूँ मैले, कति चोटि भनूँ रे
जसरी भए पनि मलाई भेट्न आउनू रे
चार वात गरीकन मन बुझाइदेऊ ज्यान ।

## चंचल मेरो मन स्थिर भएन दैव

चंचल मेरो मन कहिले स्थिर भएन दैव
धन-जन-छोरा-छोरी मायाको जाल रे ।

कुरा गर्छ लोकले-पुरुष मेरो छैन भनी
पुरुष नहुँदामा लोकले गरे हेला दैव ।
चंचल मेरो मन०

काँढाको झाँगमा फुलिरह्यो गुलाफको फूल रे
त्यसरी नै मेरो मन फुल्यो कसले टिपी लग्लान् दैव ।
चंचल मेरो मन०

सावनको कमल फुलिरहेछ मनोहर
त्यो फूल कसले टिप्ने वैइलिई जान लाग्यो दैव ।
चंचल मेरो मन०

●

## मलाई नदिए एकलासे जीवन

मलाई नदिए एकलासे जीवन
शरण लेऊ है दैव !

लोकले भन्छन् हाय
"–प्रेमी तिम्रो छैन" भनी
प्रेमी मलाई जुटाइदेऊ
यो मेरो पुकार सुनी
मलाई नदिए०

साउनको कमल समान
फुल्यो मेरो जोबन
रस लिने भमरा छैन
सुक्यो भुईंमा झरीकन ।
मलाई नदिए०

श्रीगुरु गणेशको म
मंगलवार व्रत बसें
प्रेमी पाउने आशाले
मैले अर्घ दिइरहें
मलाई नदिए०

●

# फूलबुट्टे लगौंटी एउटा

फूलबुट्टे लगौंटी एउटा तिमीलाई दिने भएँ
तिमी ज्यापू अति नै मलाई मन पर्छ ।

यो त्यो मलाई थाहा छैन केही
तिमी ज्यापू अति नै मलाई मन पर्छ
फूलबुट्टे लगौंटी एउटा तिमीलाई दिने भएँ ।

पछ्यौराको टुप्पाले कुर्कुच्चा नै छोप्छ
लाएको फरियाले पैताला नै ढाक्छ
शिरको चंपा फूलले आधि मुख छोप्छ ।

फूलबुट्टे लगौंटी एउटा तिमीलाई दिने भएँ
तिमी ज्यापू अति नै मलाई मन पर्छ
यो त्यो मलाई थाहा छैन केही ।

●

# आफ्नै जोबन पनि भयो जंजाल

सुवास व्यर्थै गयो रूप-गुण चम्पा फूल
आफ्नै जोबन पनि भयो मलाई जंजाल ।

माला लगाई आएका गोदावरी फूलको
बिर्सूं कसरी आज मन विह्वल भयो ।

कोठामा पस्छु जसै विरही हुन्छु झन् झन्
तिमीविना कसरी अब बसूँ मन राखीकन ।

नारीजाति अभागिनी यो दुःख मलाई किन ?
कसूर के भो मेरो ? वियोगको पीर दिन ।

डाँडामा फुलेका चमेलीको सुवास व्यर्थै गयो
नदेऊ वियोग यसरी सकिनँ सहन कष्ट यो ।

●

## चंछिमी कसो थाहा पाइनौ ?

चंछिमी कसो थाहा पाइनौ ?

एक दिन आएथें
बिउँझी हेरिनौ
अर्को दिन आउँदा खेरि
ढोका लगाइराख्यौ ।
चंछिमी थाहा कसो पाइनौ ?

हात खाली आइनँ
थैली खालो आइनँ
ढोका घचघच्याएँथें
बिउँझी हेरिनौ ।
चंछिमी चाल कसो पाइनौ ?

पर्खाल नाघी आऊँ कि
झ्याल चढी आऊँ कि

ढोका घचघच्याएथें
कसो चाल पाइनौ ।
चंछिमी थाहा कसो पाइनौ ?

(गीतको केही अंश मात्र भाषान्तरमा)

●

## माया रे राजा अल्झें रे

धागो कात्ने मन भए
हाम्रो पेटी आऊ रे ज्यान
हाम्रो पेटी आऊ ।

लिई आउँछ पट्ठो दाजु
शिपीभरुवा बाँसुरी
शिपीभरुवा बाँसुरी

तीनटाके धागो कातें
दुई कतू पुगेको होइन
पट्ठो दाजु काखमा बसी
धागो कात्न सकिनँ ।

आमाले सोधिन् भने,
के जवाफ दिने मैले
के भन्ने मैले लौन
माया रे राजा अल्झें रे ।

●

# आँसु झारी कति बसूँ

बलेंसीको पानी झैं
आँसु झारी कति बसूँ ?

मूलबाटो नआउनोस् है
बारीको बाटो छ
बारीको बाटो आउनुहुँदा
झ्याल कुरी बसुँला ।
बलेंसीको पानी झैं०
१

सिटो बजाई नबोलाउनोस्
ताली बजाई नबोलाउनुस्
आँखाको इशारामा नै
तल झरिहालुँला ।
बलेंसीको पानी झैं०
२

## जोबन मैले दिन लागें है

रस कसरी हुन्छ रसबस छैन
वश गर्न मैले उनलाई सकिनँ ।

कलह हुँदै आयो नभएको कुरा गरी
बिछोड होला है संगी, बिछोड होला है ।

हिजो राती आउनुभो, चुनुवा चोलो ल्याउनुभो
जोबन मेरो साह्रै काउकुती लाग्यो ।

आमालाई छलें पूजा जाने निहुँ गरी
भेटें मैले तिमीलाई, है संगी मैले भेटें ।

महांकाल देवको दिन रात सेवा गरें
बाटोमा सधैं मैले तिमीलाई भेटें ।

भररात नीद छैन, जोबनमा रस छैन
मैले लागें है संगी, जोबन मेरो दिन ।

●

# गुण्डा दाजु राम्रो छ

गुण्डा दाजु राम्रो छ
बेइमानी नगर है !

उहिले उहिले
बैंस मेरो छँदासम्म
दिनौं एक पटक आउने दाजु
अब किन आउनुभएन ?
गुण्डा दाजु राम्रो छ०
१

भमरा जस्तो नहुनोस्
बाटेको धागो नफुकाउनुस्
एकै पटकमा पुग्ने होइन
हामी त मानिस है !
गुण्डा दाजु राम्रो छ०
२

●

## त्यही मैयाँको स्वरूपै राम्रो

मैना झैं लाग्यो मलाई लक्ष्मी झैं लाग्यो
बहालमा प्रदर्शित देवी झैं लाग्यो ।

त्यही मैयाँको कुर्कुच्चा नै राम्रो
उसिनेर खवटा छोडाएको फुल झैं लाग्यो ।

त्यही मैयाँको पिंडौंला नै राम्रो
भर्खर टिपेको काँक्रो झैं लाग्यो ।

त्यही मैयाँको तिघ्रा नै राम्रो
भर्खर भरेको तकिया झैं लाग्यो ।

त्यही मैयाँको 'बयतू' नै राम्रो
भर्खर वनाएको 'दलू' झैं लाग्यो ।

त्यही मैयाँको स्तन नै राम्रो
भर्खर भरेको जधुन झैं लाग्यो ।

त्यही मैयाँको दन्त पंक्ति राम्रो
भर्खर छोडाएको अनार झैं लाग्यो ।

त्यही मैयाँको गाला नै राम्रो
भर्खर पकाएको फुल झैं लाग्यो ।

त्यही मैयाँको आँखा नै राम्रो
भर्खर टिपेको कमल झैं लाग्यो ।

त्यही मैयाँको स्वरूप नै राम्रो
भर्खर उदाएको चन्द्र झैं लाग्यो ।

●

## राजमती कुमती

राजमती कुमती मसँग आए पिरती
हाय बाबा राजमती
केश भने घुम्रेको, आँखा भने लाम्चे लाम्चे
छोरी हुन् कि साँखुलेकी

मुख भने गोरी अति, मुखमा छन् दुइटा कोठी
ताहाननीकी राजमती
राजमती कहाँ छ ? इटुंबहालमा एउटी छ
ल्याइदेऊन राजमती ।

फुल-बोक्रा कुनाभरि, पसल-चिउरा धूलो धेरै
ओइलाइछ राजमती
अघि आउने तढी थकूँ, पछि आउने चिढी थकूँ
त्यसपछि राजमती ।

तढी थकूँको तायो छ, चिढी थकूँको पायो छ
राजमतीको बिजकनी छ

तढी थकूँ मलाई हुन्न, चिढी थकूँ मेल खान्न
बिहा गरिदेऊ राजमतीसँग ।

बिजकनी नभएकी स्वास्नी मलाई हुन्न बुबा
ल्याइदेऊन राजमती
माथिल्लो ठहिटी, तल्लो टोल कोहिटी
बिचैमा मरुहिटी ।

मरुहिटीमा पानी लिंदा ढुंगा ठेस लागीकन
राजमती उत्तानो परिछ
गहना लगाएर, गुजराती बजाएर
राजमती बिहा गरिदेऊ ।

राजमती नदिए जान लागें काशी बुबा
ल्याइदेऊन राजमती
धिक्कार जन्म राजमतीको कर्म
बैंसमा लोग्ने नभएकी ।

●

## परेवाको जन्म लिएँ रे

तलेजुको मन्दिर हेर्न

परेवाको जन्म लिएँ रे

चण्डाल ब्याधा आई

बन्दूक हानी मार्‍यो रे ।

परेवाको जन्म०

१

विष्णुमती हेर्न मैले

माछाको जन्म लिएँ रे

चण्डाल पोडे आई

जालमा पारी लग्यो रे ।

परेवाको जन्म०

२

रानी पोखरी हेर्न मैले

माछाको जन्म लिएँ रे

चण्डाल बकुला आई

मलाई खाई गयो रे ।

परेवाको जन्म०

३

## नानी आउने कहिले

अहिले हो कि बेलुकी नानी,
आउने कहिले ?

पानी है पऱ्यो बतास चल्यो
फरिया भिजाउने
मेरो यो माया तिमीमै बस्यो
अहिले आउने ?
अहिले हो कि बेलुकी०

१

झलक देखें पुलुक हेरें
चंचल मन भो
लिएर आशा म आएँ यहाँ
बुझाऊ मन यो ।
अहिले हो कि बेलुकी०

२

भुलायो खास्टो दिनेछु राम्रो
सुटुक्क हिंडन
मलाई लौन जवाफ देऊ
हुन्छ कि हुँदैन ?
अहिले हो कि बेलुकी०

३

●

## मैले सुसेलेको सुनें

भात खान बसें, आधी नखाँदै
मैले सुसेलेको सुनें
एउटा निहूँ गरीकन भेटें
मैले सुसेलेको सुनें ।

तिमी जान्छौ बागमती
म जान्छु गुह्येश्वरी
तिम्रो मुख हेर्न खोज्छु
घरको काम छोडी ।

तिमी जान्छौ विष्णुमती
म जान्छु विजयेश्वरी
फूल एउटा दिन्छु म
तिमीलाई खोजी ।

दायाँ हातमा करुवा
बायाँले फरिया तानी

पिंडौला देखाईकन
नक्कली भइजान्छयौ तिमी ।

निधारमा कालो टीका
कपालमा ताडी फूल
छीटको फरिया लाएर
नक्कली भई जान्छयौ तिमी ।

भात खान बसें, आधी नखाँदै
मैले सुसेलेको सुनें
एउटा निहूँ गरीकन भेटें
मैले सुसेलेको सुनें ।

●

## ए गुण्डा दाजु !

गल्लीको कोठा क्यालैमा बस्छु ए गुण्डा दाजु !

भएको छैन बोलचाल हाम्रो चिनेको मात्रै छ
गएको किन नबोलीकन हे गुण्डा दाजु !

अउँठी तिम्रो अकबरी राम्रो माग्दछु पहिले
गल्लीको कोठा क्यालैमा बस्छु ए गुण्डा दाजु !

तिमीले दिए कण्ठश्री मुन्द्री लाउने कसरी
मुन्द्री छ मेरो यो कानभरि हे गुण्डा दाजु !

अकबरी औंठी सुनको खासा एउटा माग्दछु
गल्लीको कोठा क्यालैमा बस्छु ए गुण्डा दाजु !

●

## व्यर्थ गयो मेरो जोवन

व्यर्थ गयो मेरो जोवन व्यर्थ गयो नि
सूर्य चम्के तेज सब व्यर्थ भयो नि ।

बादल लाग्यो व्यर्थ भयो झलमल
व्यर्थ गयो मेरो जोवन व्यर्थ गयो नि ।

फलिरहेका रूखमाथि मीठा फलफूल
झारी खाने कोही छैन विष भयो सब
व्यर्थ गयो मेरो जोवन व्यर्थ गयो नि ।

कति फुलिरहेछन् रंगी-बिरंगी फूल
झरी सुके बास लिने छैन भँवरा
व्यर्थ गयो मेरो जोवन व्यर्थ गयो नि ।

●

# मलाई तिमी मन है पर्‍यो

मलाई तिमी मन है पर्‍यो
देखेर चुल्ठी त्यो
लगाई राख्यौ निधारमाथि
काल-टिकी टल्केको ।

१

पछ्यौरा चोलो फरिया चुरी
बिजकनी राम्रो
ताँवाको गाग्री च्यापेकी नानी
मन पर्‍यो बिछट्ट ।

२

आऊन यता नतर्स तरुनी
राख्तिनँ तानेर
दिनेछु मैले एउटा खासा
गोप्यको जन्तर ।

३

●

## माया रे रत्न

माया रे रत्न तिमीसँग मेरो माया ।

तिमीले ननीमा चिउरा कुट्यौ
एक प्वाकल मलाई दियौ
मायाले दिएको फुको चिउरा पनि
मीठो लाग्दो अति रे रत्न
तिमीसँग मेरो माया ।
माया रे रत्न तिमीसँग मेरो माया

हिजोको सपनीमा
तिमी मेरो भयौ भनी
उठीकन हतपत
यताउति हेरें रे रत्न
तिमीसँग मेरो माया
माया रे रत्न तिमीसँग मेरो माया

छैन हीरा छैन ज्यान
छैन कृष्ण छैन राम

अल्झेको धागो सरि
मेरो मन आज रे रत्न
तिमीसँग मेरो माया
माया रे रत्न तिमीसँग मेरो माया

बुबाले दिए दुई पैसा
मुमाले रोटी एउटा
आधी आधी बाँडूँ भनी
आज म आएँ रे रत्न
तिमीसँग मेरो माया
माया रे रत्न तिमीसँग मेरो माया ।

●

## केश कोर्ने काँगियो

केश कोर्ने काँगियो
केश घुंम्राउने सुइरो
ज्यू जम्मै देखिने ऐना त्यो ठूलो
मायामा फसें लौन राजा
मायामा फसें लौन !

'तल को आयो हँ, आमा ?'
'बिहे गर्न तँलाई माग्न आयो'
'म त जान्न है आमा'
बहिनी दिई पठाउनुस्
मायामा फसें लौन राजा
मायामा फसें लौन !

सँझ्यालमा बसी पिउरी कातें
पैसाले हानेर पठायो
एक दुई पैसा गरी बटुलें
पिउरीको बट्टा नै भरियो
सिक्री बनाइदिनुस्न आमा,
मायामा फसें लौन राजा
मायामा फसें लौन !

●

## रेशमको रुमाल

रेशमको रुमाल
रेशमको रुमाल
त्यो रुमाल खसेछ
त्यो रुमाल खसेछ ।

रेशमको रुमाल
रेशमको रुमाल
त्यो तरुनीले टिपिछ
त्यो तरुनीले टिपिछ ।

त्यही वेलादेखि
मन भुल्यो मेरो
मन भुल्यो मेरो ।

त्यो ठूलो घैंटोमा
पानी भरें मैले
पानी भरें मैले
चुहिन्छ कि भनी
पानी भरें मैले ।

हो, त्यही वेलादेखि
मन भुल्यो मेरो
मन भुल्यो मेरो ।

रेशमको रुमाल
रेशमको रुमाल
त्यो रुमाल खसेछ
त्यो तरुनीले टिपिछ
त्यो तरुनीले टिपिछ ।

●

## नानी ! लैजालान् फकाई

गुमान नगर नानी, लैजालान् फकाई ।

निधारमाथि कालो छ टीका चुल्ठी त बाटेकी
मुहार आधा ढाकिने गरी नीलो फूल लाएकी ।

छीटको राम्रो फरिया चोलो साटनको लगाई
दोबरी राम्रो पछ्यौरो दिई नानी, लैजालान् फकाई ।

नारीमा सुन-चुरी, खुट्टामा राम्रो पाउजेब लगाई
अकबरी खासा औंठी दिई नानी, लैजालान् फकाई ।

बट्टामा टीका थैलीमा गाजल भरेर सजाई
हलपी ऐना देखाईकन नानी, लैजालान् फकाई ।

कपाल कोर्न काइँयो र स्यूँदो नै काट्न सुइरी
तुल धागो सचिका दिई नानी, लैजालान् फकाई ।

●

## हुक्का चिलिम नली चिलिम

हुक्का चिलिम नली चिलिम
एक फेरा तमाखु ख्वाऊ मैंचा,
एक फेरा तमाखु ख्वाऊ
मलाई जान अबेर भयो,
साँखुलेकी छोरीले
मलाई गिज्याउली मैंचा
माया रे राजा अल्कें रे ।

मुसुमुसु मात्र हाँसी
माया जालमा अल्झाई
टुलुटुलु मात्र हेरी
मुसुमुसु मात्र हाँसी
मेरो मन चञ्चल पाऱ्यो
माया रे राजा अल्कें रे ।

दालचिनी-पाता नरिवल-हुक्का
सिलेबरको चिलिम

ए दाइ, सिलेबरको चिलिम
यो तमाखु नखाएदेखि
जन्मभर पुग्ने मलाई
माया छैन रे ए दाइ
माया छैन रे ?

हिजो राती डुल्न आएँ
तरुनीले मुख फर्काइन्
एक दिन ढोका बन्द
दोस्रो दिन बिउँझिनौ
त्यसरी बोलाउँदा पनि
'हूँ' भनी भनिनौ
माया छैन र ए मैंचा
माया छैन र ?

●

# तिमी एउटी किन किन मलाई मन पर्छ

तिम्रो आमा-बाबुदेखि मलाई डर लाग्छ
तिमी एउटी किन किन मलाई मन पर्छ ।

पछ्यौराको टुप्पाले कुर्कुच्चा नै छोप्छ
लाइआएको पछ्यौराले पाउ सबै छोप्छ
शिरको चंपा फूलले आधा मुख ढाक्छ ।

चुल्ठी मेरो अति राम्रो ओइलिएर जान्छ
टीका मेरो निधारको मेटिएर जान्छ
आमाले देखे भने मलाई गाली गर्छिन् ।

तिम्रो टीकालाई सुका एक पर्छ
तिम्रो चोलोलाई सुका दुई पर्छ
सिंगारको मोल तिम्रो सुका पाँच पर्छ ।

तिमी एउटी किन किन मलाई मन पर्छ
तिम्रो आमा-बाबुदेखि मलाई डर लाग्छ ।

●

## म पापी सिपाहीसँग परें

एउटी दिदी जर्नेलसित
एउटी दिदी कर्णेलसित
म पापी सिपाहीसँग परें रे राजा
म पापी सिपाहीसँग परें ।

पानी पऱ्यो सिरिरिरी
बतास चल्यो हुरुरुरु
सुन्तला बररर
खस्यो रे राजा
सुन्तला बररर खसे ।

भात खाएँ कौसीमा
बत्ती निभ्यो बतासले
तिम्रो पोइ मै होइन र सुन्दरी ज्यान ?
तिम्रो पोइ मै होइन र ?

•

## यो कुन गल्ली त्यो कुन गल्ली

यो कुन गल्ली त्यो कुन गल्ली
मखनटोलको गल्ली रे
पानबत्ती मैयाँले लाएर आइन्
सिंहमुखे कल्ली रे।

१

कहाँ जान लाग्यौ नानी
कहाँ जान लाग्यौ रे ?
छिङरिङ र छिङरिङ कल्ली बजाई
कतातिर लाग्ने रे।

२

हाम्रो कौसीमा फुलिरह्यो
सूर्यमुखीको फूल रे
मन पर्छ कि पानबत्ती मैयाँ
पुतलीबुट्टे काँटा रे ?

३

●

## दियो नभा' कोठाभित्र

दियो नभा' कोठाभित्र को को पसेर
छामछुम गरो हेर्‍यो
यो को ? यो को ? भनी सोद्धा, सुस्त सुस्त खोक्यो ।
असिद्धि लाग्ने रहेछ ।

हिस्सी नभएकी स्वास्नी २
छामछुम गरी हेर्दा– 'नाचिपोगा'
चाक पहेंलो ३

आज भोलिका ठिटीहरू बाटेका चुल्ठो
जुरो चुल्ठी खुचुमुचेको, ठिटो जति रसले भरेको २
निधारमा टीका लगाई लाम्चे पारेर
पंखा फूल लगाई मुसुक्क हाँसी हिंड्छन् ।

आऊँ भन, बसूँ भन ती ठिटीहरू ३

(भाषान्तर साधारण रूपमा)

●

## खाने कुरा भए नारी

खाने कुरा भए नारी, यसो त्यसो कहाँ साथी
मन कानो नारीले त स्वाक स्वाक गर्छे साथी ।१।

छोड्ने कसो मिल्ने गाह्रो बालबच्चा हुन्छन् साथी
हातखुट्टा भरी नाना लगाएर हिंड्छे साथी ।२।

पटुका छेऊ फुस्काएर घिसारी हिंड्छे साथी
हुस्सु नारी कैल्यै पनि ल्याउन हुन्न साथी ।३।

परचक्रीबाट हेला हुने गरी बस्छे साथी
लाज धेरै हुने गरी मन बिगारी बस्छे साथी ।४।

गर्नेछैन सफा केही लथालंग राख्छे साथी
भाँडाकुँडा ढुसी पारी छ्यालब्याल गर्छे साथी ।५।

माकुराले जालो बुन्छ निर्घिनी हुन्छे साथी
एक हात धूलो पारी उपियाँ नाच हेर्छे साथी ।६।

चुक्लीचाक्ली गरीकन लोग्ने अघि सार्छे साथी
दाल भात रुच्छ भनी सुरु सुरु खान्छे साथी ।७।

काम दिए सासुले त गाह्रो मानी बस्छे साथी
घाम प्यारो मानी लिखा टिपी बस्छे साथी ।८।

ढ्याङढिङ पाउ सारी चुल्ठी छोडी हिंड्छे साथी
चर्खा मात्र सामु राखी निदाएर बस्छे साथी ।९।

वर्षदिन थान एकै बुन्न कहाँ सक्छे साथी
निरबुद्धि नारीले त भूस धूवाँ पार्छे साथी ।१०।

कुलच्छिनी नारी दोष—लक्ष्मी भाग्छिन् साथी
भएसम्म धन जन अपव्यय गर्छे साथी ।११।

जति ल्याऊ कमाएर, खर्च कहाँ भेट्ने साथी
नारी घर ल्याउन जाँचबुझ गरे साथी ।१२।

हीरा मोती परीक्षा झैं जाँचबुझ गरे साथी
भाँडा किन्दा कुमालेको झैं त्वाँग त्वाँग हानी हेरे साथी ।१३।

अज्ञानीले भने यति क्षमा गर्नुपर्छ साथी
खानेकुरा भए नारी यसो त्यसो कहाँ साथी ।१४।

●

## कचिंगल नारी आए

हादे– कचिंगल नारी आए दुःख भोग्नुपर्ला
चुक्ली-चाक्ली गरीकन दाजु भाइ फाट्छे ।

हुस्सु नारी आए भने काम कहाँ दिन्छे साथी,
–धन मात्र खर्च हुन्छ दुःख धेरै पाउँछ

हादे– सुन्नुपर्ला नचाहिने, कोठा कथा भन्छे
चुलबुले नारीले त दाजु-भाइ तोड्छे ।

एक दुई ठाउँ नपुगेर यताउति घुम्छे साथी,
दायाँ बायाँ सिसी राखी निहू थापी हिंड्छे ।

हादे– झगडिया नारी आए ढुकुटी नै सोहर्छे
कमाएको सबै लिई आफ्नो पेवा पार्छे ।

साना ठूला नभनेर यताउति घुम्छे साथी,
आफ्नै मात्र स्वार्थ हेरी चुलबुले बन्छे ।

हादे– दयाहीन नारीले त मीठो राम्रो खान्छे
धन सब नासीकन दुःख दिई बस्छे ।

खवाई लाई राखेसम्म लोग्ने प्यारो गर्छे साथी,
रिसाएर केही भने छोडी जान्छु भन्छे ।

हादे– ठगाठिगा नारी आए भने यताउति घुम्छे
कमाएको सबै खाई लोग्ने छोड्छु भन्छे ।

धर्महीन नारी आए बच्चा छोडी हिंड्छे साथी,
खाएका पात सुक्न अघि पाचुके पो माग्छे ।

हादे– स्वाँग गरी गरी लुगा गहना माग्छे
सकेसम्म हात पारी लोग्ने वश गर्छे ।

पापी मुख तरुनीले थैली खोली हेर्छे साथी,
भयहीन नारीले त जथाभावी गर्छे ।

हादे– नभएका कुरा गरी लोग्ने थर्काइ बस्छे
जादुटुना गरी खवाई लोग्ने वश पार्छे ।

रस हुने नारीले त दाम पैह्ले माग्छे साथी,
लाज शर्म हीन भइ सबै धन खान्छे ।

हादे– गहना लुगा देखाउन उपासना बस्छे
सज्जन भाजु भेटी निहू खोजी हिंड्छे ।

कुरौटेनी नारीले त लोग्ने वश पर्छे साथी,
जन्म पाश जंजालमा अल्झाएर राख्छे ।

हादे– हठधर्मी नारीले त लोग्ने उडाएर लग्छे
घरका बूढाबूढीलाई पाल्न छर्को मान्छे साथी,

पूर्वे भाखा क ख को कुरा सुन्नुपर्‍यो
संसारले शर्म धर्म छोड्न भएन लोक साथी ।

●

## ढंग छैन बुहारी

जिऊ बनेसरि काम दिन सकिनौ
ढंग छैन बुहारी ढंग छैन ।

पकाए भात डढाइदिने तिहुन त नुनिलो
गाली नै गरे रिसाइहाल्ने, ढंग छैन बुहारी ।
जिउ बनेसरी०

फास्स न फुस्सा काम गरी खाने बाटाभरि
देखाई हिंड्ने बेफुर्सती छैं, ढंग छैन बुहारी ।
जिउ बनेसरी०

छोएको छैन तान पनि कातेको खोइ बत्ती
शरम अलि होइन मान्ने, ढंग छैन बुहारी ।
जिउ बनेसरी०

दुख्ला कि पेट भनेर मकै हेरेर बस्छौ नि
ठगेर लोग्ने पल्केकी खान, ढंग छैन बुहारी ।
जिउ बनेसरी०

●

# माइत बसी पार पाउँदिनँ र

हेरन फुपूसासू, मन परेन भने
माइती बसी पार पाउँदिनँ र ?

बिहानै उठी कुचो लाएँ भात पकाई ख्वाएँ मैले
जूठो अलि गएन भनी मन परेन भने मलाई ।

हेरन फुपूसासू, मन परेन भने
माइती बसी पार पाउँदिनँ र ?

ऐना हेरी सिंगार गरें, नङ काटी माहुर लाएँ
यताउति गएँ भनी मन परेन भने मलाई ।

हेरन फुपूसासू, मन परेन भने
माइती बसी पार पाउँदिनँ र ?

●

# आज चित्त फाट्यो काकी

आज चित्त फाट्यो काकी, आज चित्त फाट्यो
नङमासु कैं मिलेर आज चित्त फाट्यो काकी !

पातो राखी तमाखु भर्छु, सधैं घुर्की सुन्छु
आज मेरो जोबन बित्यो घर छोड भने, काका !

भएका सबै नासेर जुवा खेली हिंडे आफू
आज चित्त फाट्यो काकी, आज चित्त फाट्यो !

मीठो मीठो जोरें भने सबै खाएर जान्छन्
नून अलि बढी भए टोलै थर्काउँछन् काकी !

मलाई आज जुत्ता हाने अलच्छिनी भनेर
पिटी पिटी मारे आज गाली गरे हजार ।

नङमासु कैं मिलेर आज चित्त फाट्यो काको
आज चित्त फाट्यो काकी, आज चित्त फाट्यो ।

## त्यो पापी लोग्ने मलाई

त्यो पापी लोग्ने मलाई मन परेन है आमा ।

हे बुबा मुमा, लिनोस्न गई सुपारी खोसेर,
म जानेछैन अवश्य पनि त्यो घर सम्झेर ।
त्यो पापी लोग्ने मलाई०

अहिलेसम्म बितेको छैन सन्तान छैन नि
पछि भो भने हामीलाई पछुतो होला नि ।
त्यो पापी लोग्ने मलाई०

सुपारी टुक्रा ल्वांगको फूल लिएको छैन नि
एउटै धागो यो चुल्ठो बाट्ने दिएको छैन नि ।
त्यो पापी लोग्ने मलाई०

म कहीं गए त्यसले सोध्छ गइथिस् कहाँ तँ
त्यो किरन्टोकी मलाई पति मनले खाएन ।
त्यो पापी लोग्ने मलाई०

सौताको छैन पतिको छैन भर छैन कसैको,
मलाई सुख नहुने घर जान्न है त्यसको ।
त्यो पापी लोग्ने मलाई०

●

# नचाहिने टण्टा लिन्छन्

नचाहिने टण्टा लिन्छन्, कसरी हरिभक्ति गर्छन् ?

उहिलेका मानिस बिहान सबेरै उठ्छन्
पशुपति र गुह्येश्वरी सधैं जाने गर्छन् ।
नचाहिने टण्टा लिन्छन्०

अहिलेका मानिस घाम झुल्केपछि उठ्छन्
थालमा भात पस्काई कौसीमा मुख धुन्छन् ।
नचाहिने टण्टा लिन्छन्०

उहिलेका मानिस घरबुना लुगा लाउँछन्
भुईंमा घोटी लाउँदा पनि दुई चार महीना खप्छन् ।
नचाहिने टण्टा लिन्छन्०

अहिलेका मानिस बजारिया लुगा लाउँछन्
दुई चार महीना नहुँदै पिरिपिर फाट्छन् ।
नचाहिने टण्टा लिन्छन्०

●

## बालगीत

लोकगीत तथा लोकसंस्कृतिको क्षेत्रमा बालगीतले पनि प्रमुख स्थान लिएको छ। यी बालगीतलाई तीन क्षेत्रमा विभाजन गर्न सकिन्छ— एक स्वयं बालकहरूले गाउने, दोस्रो बालकहरूको मनोरञ्जन आदिको निम्ति आमा अथवा दिदी बहिनीहरूले गाउने र अर्को ती बालकहरूसँग मिलेर गाउने अथवा भन्ने। यस्ता गीतहरू लोकगीतको पंक्तिमा राख्न सहमत कसै-कसैको नभए पनि मेरो विचारमा यी पनि एक प्रकारका पुराना लोकगीतसमकक्ष नै हुन्।

यसरी नेवारी संस्कृतिमा यी बालगीतहरू केवल मनोरञ्जनको साधन मात्र नभएर बाल-बालिकाहरूको प्रत्येक क्रिया-कलापसँग सम्बन्ध राख्दै प्रोत्साहित गर्दै अगाडि बढेका छन्— हँसाउन, हिंडाउन, सुताउन तथा शान्त गर्न। यसैले बालगीत बालकको पोषक हो, मलाई लाग्छ— बालगीतविनाको बालक रूखो हुनुपर्छ। र समाजको गतिविधि तथा भाषा शब्दको ज्ञान पाउन पनि अरू केही पछि पर्नुपर्दछ। बालगीतले भावना तथा

हावभावद्वारा भाषा एवं शब्दको ज्ञान दिन्छन् । अनि त्यही सामान्य ज्ञानको आधारमा अगाडि बढ्ने प्रेरणा बालकले पाउन सक्छन् । त्यसैले यी बाललोकगीत नेवारी संस्कृतिलाई सम्झना दिलाउँदै प्रायः प्रत्येक घरमा बोलिरहेकै छन्— अझै पनि ।

●

## तरुन राजा

तरुन राजा तरुन,
तरुनी स्वास्नी ल्याउने
नयाँ घरमा बस्ने ।

तरुन राजा तरुन,
अक्षर पढी खाने
आमाबाबु पाल्ने ।

तरुन राजा तरुन,
ज्ञानी भई पढ्ने
कुल थामी बस्ने ।

तरुन राजा तरुन,
ज्ञान गुण सिक्ने
इज्जत राखी बस्ने ।

तरुन राजा तरुन,
तरुनी स्वास्नी ल्याउने
नयाँ घरमा बस्ने ।

●

## रुन्चे बालक खान आएँ

तल को आयो ?
धाब्लाँ ख्याक
किन आयो ?
बालक रुन्चे-रुन्चेलाई मात्र खान आयो ।

मासु जमेको खान्नँ
रगत जमेको खान्नँ
बालक रुन्चे-रुन्चेलाई मात्र खान्छु ।

दाल भात खान्नँ
मासु भात खान्नँ
बालक रुन्चे-रुन्चेलाई मात्र खान्छु ।

कुखुराको चल्ला खान्नँ
हाँसको चल्ला खान्नँ
बालक रुन्चे-रुन्चेलाई मात्र खान्छु

●

## ज्ञानी राजा

ज्ञानी राजा ज्ञानी,

बुवाले एक फेरा लिन आऊ
मुमाले एक फेरा लिन आऊ
मेरा राजालाई बुबू ख्वाउन आऊ ।

ज्ञानो राजा ज्ञानी,

दिदीले एक फेरा लिन आऊ
बहिनीले एक फेरा लिन आऊ
मेरो राजालाई पापा ख्वाउन आऊ ।

ज्ञानो राजा ज्ञानी,

फुफूले एक फेरा लिन आऊ
दाइले एक फेरा लिन आऊ
मेरो राजालाई 'चाइ-चाइ' ख्वाउन आऊ ।

ज्ञानी राजा ज्ञानी,

बुवा चाँडै आऊ
मुमा चाँडै आऊ
मेरो ज्ञानीलाई चाँडै लिन आऊ ।

## चन्दा राजा

चन्दा राजा ! चन्दा राजा !
पापा पकायौ कि ?
तिमीलाई आधा, मलाई आधा
बाँडेर खाऔं कि ?
माथि आऊ, माथि आऊ
बाँडी खाऔं आऊ ।
कहाँबाट आऊँ ? कहाँबाट आऊँ ?
चूल्होको मुखबाट आऊ
आगोले पोल्छ, आगोले पोल्छ
आगो निभाई आऊ
कसरी निभाऊँ ? कसरी निभाऊँ ?
पानी छर्की आऊ
हिलो हुन्छ, हिलो हुन्छ
भूस छर्की आऊ ।

●

## भित्रो धौता हेरूँ बाबु

भित्त धौता हेरूँ बाबु
भित्त धौता हेरूँ,
टुकुटुकु आए भने
चाँप लगाइदिन्छु,
मुमाको बुबू खाने भए
टुकुटुकु आऊ ।

१

भित्त धौता हेरूँ बाबु,
भित्त धौता हेरूँ
टुकुटुकु आए भने घर बनाइदिन्छु,
तरुनी स्वास्नो मन परे
टुकुटुकु आऊ ।

२

भित्त धौता हेरूँ बाबु,
भित्त धौता हेरूँ,

टुकुटुकु आए भने
नयाँ लुगा दिन्छु,
आमाबाबु पाल्ने भए
टुकुटुकु आऊ ।

३

## तेरो हात कहाँ गयो

तेरो हात कहाँ गयो ? मूसाले लग्यो ।
रगत कति आयो ? पाथीभर आयो ।
रगत कसलाई दिइस् ? कसाइनीलाई दिएँ ।
कसाइनीले के दिई ? दूध दिई ।
दूध कसलाई दिइस् ? दहीबन्जारालाई दिएँ ।
दहीबन्जाराले के दियो ? दही दियो ।
दही कसलाई दिइस् ? बरहीलाई दिएँ ।
बरहीले के दियो ? पान-सुपारी दियो ।
पान-सुपारी के गरिस् ? माहुतेलाई दिएँ ।
माहुतेले के दियो ? हात्ती दियो ।
हात्ती कसलाई दिइस् ? राजालाई दिएँ ।
राजाले के दियो ? गहना लुगा दियो ।
गहना लुगा के गरिस् ? लाएर सिद्धियो ।

●

## धाब्लाँ ख्याक

तल को आयो ?

धाब्लाँ ख्याक !

किन आयो ?

भोज खान आयो !

के भोज ?

चाकुमढी भोज !

के चाकु ?

वन चाकु !

के वन ?

डल्लो वन !

के डल्लो ?

फर्सी डल्लो !

के फर्सी ?

खैरो फर्सी !

के खैरो ?

बाँदर खैरो !

के बाँदर ?

वन बाँदर !

के वन ?

धाब्लाँ ख्याकको वन !!

●

# केही टिप्पणी

## १. हे हे माधव

माघ श्रीपञ्चमीदेखि यहाँ वसन्त मानिन्छ र फाल्गुनको पूर्णिमाको चीरदाह गर्ने दिनसम्म वसन्त गाउने चलन छ। यस वसन्तकालका गीतहरूमा अरू गीतको अतिरिक्त– हे हे माधव नदिए पीर मनमा, आए श्री मंजुदेव आदि छन्। देवाली मनाइने पनि यसै समयमा पर्न आउने भएको हुँदा आफ्-आफ्ना कुलदेवताको प्रार्थनास्वरूप विभिन्न गीत वसन्त लयमा गाउने प्रथा पनि छ। मोह् गरिन् वाह् रे बाह् पनि यसै लयमा गाइन्छ।

## २. नारायणजी

आश्विन पूर्णिमा (कतिपुह्नि) देखि कार्तिक पूर्णिमा (सकिमनापुह्नि) सम्म घनाश्री लयमा यो गीत गाइने चलन छ। बूढानीलकण्ठमा श्रीनारायणजीको मेला पनि यसै समयमा लाग्छ र श्रीनारायणजीको आराधना भजन कीर्तन गरिन्छ।

३. गंगा माई

निर्मल जल-थोपाको रूपमा मानिएकी, रथमा चढेकी (जात्रामा) गंगा माईलाई संबोधित गर्दै वर्सादको वातावरणको उल्लेख; यो गीत स्वरथ लयमा रोपाइँ समय तथा जात्रामा गाइन्छ ।

४. शीतला माई

बिफर तथा रोग व्याधि फैलिने समय वैशाख जेठ; रोग व्याधि शान्त गर्न यस समय कहुकोलाको लयमा शीतला माईका गीत गाइन्छन् । एक थरी यस समय जेठ मध्यदेखि काठमाडौं उपत्यकामा पुवा (धानको बीऊ) राख्ने र उखेल्ने समय हुँदा यस समय गाइने गीतलाई पुवाडे गीत पनि भने । अर्को थरी त्रितारामण्डल पुवाडे गीत हो र यो मङसीर पूसमा गाइने भन्दो रहेछ र यहाँ विवादास्पद छ ।

५. श्री दीपंकर (दिपंखा) जाऔं

पाटन नागबहालस्थित ढुंगाको एक बाछो; जसलाई पितलले मोडेको छ, राती कराएको सुनेपछि श्रद्धालु भक्तजनहरू मिली विभिन्न देवी देवता तथा पीठ आदि तीर्थस्थान घुम्न जाने गर्छन् र एक प्रकारको दीपंकर मेला लाग्छ । यसरी दीपंकरको कुनै निश्चित समय हुँदैन, जुन बेला उक्त बाछो कराएको सुनिन्छ, त्यसै समय मात्र यसको मेला लाग्ने हुनाले ५, ६ अथवा १२ वर्षको लामो अवधिमा पनि एक पटक घुम्न जाने मेला लाग्दछ । प्रस्तुत गीतमा साल मिति पनि दिइएको छ र राग धनाश्रीमा रचिएको छ ।

### ६. मंगल गरे श्री भीमराज

काठमाडौं उपत्यका अथवा यसका आसपासका व्यापारीहरू मल्लकाल अथवा यसभन्दा अगाडिदेखि नै तिब्बतको ल्हासा शहरमा व्यापारको निम्ति जान्थे । यी नेपाली व्यापारीहरूले त्यहाँ नेपालका भीमसेन देवताको नाममा दिनौं केही न केही चढाएका संकलित भेटीहरू लिन भीमसेनका पुजारीहरू ल्हासासम्म वर्ष, ६ मासमा एक पटक जान्थे । यसरी ल्हासाका नेपाली व्यापारी-हरूले भीमसेन देवतालाई मान्ने गरेको कारण यिनका वियोगमा परेका पत्नीहरूले पनि मंगलको निम्ति भीमसेनकै प्रायः प्रार्थना र पूजा गर्थे । यसरी ल्हासाको उल्लेख गरिएका र भीमसेनको प्रार्थनाका गीत साधारणतया रोपाइँलयमा गाइन्छन् ।

### ७. जय श्री वासुकि नागराज

कृषिप्रधान क्षेत्र काठमाडौं उपत्यकाको उर्वरा भूमिको निम्ति पानीको विशेष महत्त्व छ, तर यस क्षेत्रमा बराबर अनावृष्टि भएको कुरा विभिन्न घटनाबाट बोध हुन्छ । यसरी अनावृष्टि हुँदा शहर घुमेर पानी माग्न जानुको अतिरिक्त विभिन्न स्थानका देवी-देवतासँग प्रार्थना गर्ने र पुरश्चरण बस्ने पनि गरिन्छ । प्रस्तुत गीत श्री ५ गीर्वाणयुद्धविक्रम शाहसँग सम्बन्धित भएकोले त्यसताक केही अनावृष्टि भएको र त्यसको निवारणार्थ श्रद्धालु जन विभिन्न देवस्थल गएको सम्झनास्वरूप रचिएको अनुमान छ । रोपाइँकालमा गाइने यस्ता गीतहरूमा सामयिक सामाजिक स्तम्भमा रहेको "म आ'को मास नहुँदै, मंगल गरे श्री भीमराज, पिरतीको पुरुषले छाडी गए, मणिचूड राजा" आदि हुन् । रोपाईंगीतहरू आषाढ-देखि नै रोपाइँलयमा शुरू गरी श्रावण (गठेमंगल) सम्म गाइन्छन् ।

८. सिलुतीर्थ

काठमाडौं उपत्यकाको उत्तर हिमालयखण्डमा रहेको सिलुतीर्थ नै गोसाइँकुण्ड हो। यसको मेला वर्षमा दुई पटक लाग्छ। यस मेलामा दम्पती जान नहुने लोकोक्तिअनुसार अहिले-सम्म पनि दम्पतीले त्यहाँ मेला भर्न जान नहुने जनविश्वास व्याप्त रूपमा रहेको छ। सिलुगीत वियोगान्त भएर पनि संयोगान्त हो र यो गीत जनैपूर्णिमा-मेलाका समय भूपाली रागमा गाइने चलन छ।

९. त्रितारामण्डल

यो गीत भाषा र शब्दको अध्ययन-विश्लेषणबाट अत्यन्तै पुरानो र वियोगान्त हो। सुनिन्छ यो गीत राम्रोसँग गाउन जान्ने मानिसले गाएमा श्रोतागण कसैले पनि आफ्नू मनलाई थाम्न सक्दैन र धुरुधुरु रुन थाल्छ। यो गीत गाएर अपूरो छोड्न नहुने अर्को लोकोक्ति छ। त्रितारामण्डलसँग सम्बन्धित यो गीत खास कुन समयमा गाइने हो यकीन गर्न नसके पनि उक्त तारा हेर्दै मङ्सीर, पूसताक गाइने एक थरीको धारणा छ। यो गीत भाषा र अरू गीतको लयभन्दा भिन्नै रहेको कारण गाउन कठिन हुनाको अतिरिक्त गाउन सक्ने मानिस पाउन पनि दुर्लभ भइसकेको धारणा छ।

१०. बाबुको मन कल्पेर रोयो

काठमाडौं उपत्यकामा कृषि-मलको निम्ति केही वर्ष अगाडिसम्म कालीमाटी झिक्ने प्रथा थियो। यसको प्रयोग विशेष गरी काठमाडौं उपत्यकामा देखिन्छ। प्रस्तुत गीतमा कालिमाटी

झिक्दाको हृदयविदारक दृश्य प्रस्तुत गरिएको छ, तर गीत सामयिक भए तापनि गाउने चलन उतिको देखिंदैन ।

### ११. मलाई लेऊ तिमी, म लिन्छु तिमीलाई

भाद्र शुक्ल (काय अष्टमी) देखि आश्विन पूर्णिमा (कतिपुनी) सम्म दशैंको समय मानिआएको फलस्वरूप मालश्री-लयमा विभिन्न गीत गाइन्छन् । जय ईश्वरी महाकालिका तथा मलाई लेऊ तिमी, म लिन्छु तिमीलाई गीतमध्ये एउटा महा-कालिकाको सामयिक भजन भए अर्को सामाजिक प्रेम-रसको गीत हो । दशैंको रमक्रम, खानापीनाको तरीका एवं आनन्दमय वातावरण यस गीतले दर्शाएको छ ।

### १२. योमढी चोसिलो

योमढी एक विशेष प्रकारको रोटी भएकैं यसलाई खाने विशेष दिन मङसोर धान्यपूर्णिमा बेलुकीपख आफ्नै लयका गीत गाएर बगालका बगाल केटाकेटीहरू घर घर योमढी माग्न जान्छन् । योमढीको अतिरिक्त लक्ष्मीका सेवक-सेविकाका प्रतीक विभिन्न आकृति बनाई नयाँ धान राखिएको भकारीमा पूजा गरी चाड मनाइन्छ ।

### १३. कुलदेवी बन्धक राखूँ

करीब ६० वर्षअगाडिकी एक सुन्दरी काठमाडौंकी आइमाई, सौन्दर्यको कारण कलंक भोग्न परेकी, फागुन जस्तो समयमा गाइने अश्लील गीतमा समावेश गरिएकी कुलदेवी;

फागुमा गाइने कुलदेवीका यस्ता गीतपछि टुंडिखेलमा चीरदाह गरी फर्कदा (त्यसै समयदेखि) घाटु लयमा बिभिन्न गीत गाउने प्रथा छ । यस्ता गीत– परदेश पठाई, हरि म कहाँ जाऊँ ? यस्तो रसरंग छोडी आदि हुन् ।

### १४. हेर्ने बेला भयो गंगामाई

वडामहाराज श्री ५ पृथिवीनारायण शाहको नेपाल आक्रमणमा सन् १७७१ मा भक्तपुरका अंतिम मल्ल राजा श्री रणजीत पराजित भएपछि यिनी काशीबास गएको इतिहासमा उल्लिखित छ । प्रस्तुत गीतमा पीडा व्यक्त गरिएको छ ।

### १५. हारती माता

स्वयम्भूस्थित हारती माताले बौद्ध ग्रन्थअनुसार उस समय काठमाडौं उपत्यकामा प्रत्येक दिन बालख खाएर जनतामा आतंक फैलाएपछि त्यसलाई रोक्न भगवान्ले यक्षिणीको एउटा छोरो लुकाइदिंदा यक्षिणी छोरो नपाएर छटपटिंदै दु:खित भई भगवान्को शरणमा गई पुकार्न थालिन् र अबदेखि यस्तो जघन्य अपराध नगर्ने र केटाकेटीहरूको संरक्षिका भएर बस्ने प्रतिज्ञा गरी आफ्ना ५०० छोराछोरीमध्ये ५ जना मात्र आफ्ना साथमा राखी अरू भुईंमुनि राखिदिइन् । यसै बेलादेखि यक्षिणी केटाकेटीहरूको संरक्षिका देवीको रूपमा पुजिन थालेको जनधारणा छ ।

### १६. पिरतीले आरती गरौं

यो गीत महासत्त्व (हस्तलिखित) नाटकबाट लिइएको

छ । यस गीतको अन्त्यमा नेवारीमा लेखिएको भाषान्तरको साथ प्रस्तुत गरिन्छ—

इति श्री नेपालेश्वर महाराजाधिराज श्री ५ राजेन्द्र-विक्रम शाहदेव विरचित नमोबुद्ध भगवान् आदरभाव महासत्त्व पाख्यानम् नाटक तृतीयांक समाप्तम् ।

संवत् ९५१ मिति फागुन कृष्ण दशमी बृहस्पतिबार-का दिन चारवहिल (चावहिल ?) देश खेर क्वोर यन्ता छपँका शाक्य भिक्षु रत्नमुनि प्रमुख भएर श्री नमोबुद्ध पाख्यानम् महासत्त्व नाटक बनाई खेलेको दिन भयो ।

### १७. इन्द्रजात्रा हेर्न जाऔं

एउटा ठूलो चाड, भाद्र शुक्ल द्वादशीका दिन देवता र दैत्य-बीच भएको युद्धमा देवपक्षको विजयस्वरूप फहराएको इन्द्रध्वज, एक हप्तासम्म रहने जात्रा । जे होस् अति पुरानो र विशेष रमझमका साथ हुने यो मेला हेर्न दर्शकमा कौतूहल उठ्छ र सकेसम्म शृंगार-पटार गरी आफूलाई अगाडि सार्छन्— जात्रा बढी स्पष्ट देख्न सकियोस् अथवा गीतमा उल्लेख भएझैं ठिटीले ठिटालाई या ठिटाले ठिटीलाई बढी आकर्षित गर्न सकून् । इन्द्र-जात्राको सम्झनार्थ रचिएको प्रस्तुत गीत रमाइलो वातावरण व्यक्त गर्न पछाडि परेको देखिदैन ।

### १८. महारानी विजयालक्ष्मी

सन् १८०५ मा जब श्री ५ रणबहादुर शाहको स्वर्गा-रोहण भयो, त्यस समय महारानी विजयालक्ष्मी (राजेश्वरी) हेलम्बुमा निर्वासित थिइन् । राजनैतिक दाउपेचबाट भाइ-भारदार

तथा गुरु पुरोहित पर्यन्तले उनलाई सती जान वाध्य गरे । कलुषित वातावरणलाई व्यक्त गरिएको यो गीत विभास रागमा गाइन्छ र मार्मिक छ ।

**१९. सुन हे श्रीभैरवनाथ**

एउटा अत्यन्त गरीब व्यक्तिको करुण गाथासँग सम्वन्धित; आफ्नी सुत्केरी स्वास्नीलाई ख्वाउन विवशता, चोर्न वाध्यता । चोरीमा पुलिसले समातेपछि (बाखँ-मेंअनुसार) फाँसी दिनुअगाडि यिनले पचली भैरवअगाडि आफ्नू करुण गाथा व्यक्त गरेको यो गीत श्रीरागमा गाइन्छ ।

**२०. पोइल जाने बथलीको छोरी रे**

विभास रागमा गाइने यो गीत मार्मिक रोचक, एवं भाषा पुरानो हुनुको अतिरिक्त यसमा सामाजिक सत्य घटना प्रस्तुत गरिएको छ ।

**२१. राजमती कुमती**

आफ्नै सौन्दर्यले आफ्नो प्रतिभा स्थापना गर्न सकेकी इटुंबहालकी एउटी ठिटी सर्वसामान्य, सर्वसन्मान्य । प्रेमरसका गीतको पंक्तिमा—माया रे रत्न, माया रे राजा अल्कें रे, गुण्डा दाजु राम्रो छ, वारि होइन पारि होइन, मेरो मन उडाई लाने, फूलबुट्टे लँगौटी एउटा आदि ।

**२२. दियो नभा' कोठाभित्र**

एउटा छोटो सरस व्यंग्य; काठमाडौंका माथिल्लो टोलका कुह्मालेहरूमा प्रत्येक १२ वर्षमा महीनाभर निस्कने— 'कथ';

प्रत्येक १२ वर्षभित्र घटेका घटनाको विश्लेषण व्यंगको एक तरोका; विनाआवाजका नकली वाजाको साथ लिएका भोटे भोटिनी, ज्यापूनी आदिको एक टोली । यस्ता व्यंग्यगीतका पंक्तिमा 'खानेकुरा भए नारी, कचिगल नारी आए' आदि पर्छन् ।

## २३. तेरो हात कहाँ गयो

विशेष गरी जाडो मौसममा राती कोठाभित्र न्यानो गरी बसेर आ-आफना हातहरू लुकाई भन्ने बाल-मनोरञ्जनका गीत। यस स्तंभका प्रत्येक गीत आ-आफ्नै ढंगमा प्रयोग गरिन्छन् र फकाउन, तर्साउन, खुवाउन, हिंडाउन प्रत्येक गीतको आ-आफ्नै विशेषता छ।

# नेवारी संस्कृतिमा प्रयोग हुने केही बाजाहरू

**खिं**– मृदंग किसिमको बाजा, तर आकारमा मृदंगभन्दा केही सानो। यसको छालाले मोडेको मुखको गोलाइ एकातिर केही सानो र अर्कोतिर केही ठूलो हुन्छ। नेवारी लोकगीतमा प्रायः यसको प्रयोग सुनिन्छ। यो ज्यादै प्रचलित बाजा हो।

**पछिमा**– एकातिर मात्र 'खौ' राखेको मृदंगकै आकार प्रकारको बाजा। यसको अर्को मुखमा गहुँको पीठो मुछेर छालाको मुखको केन्द्रमा टाँसिराखेको हुन्छ। धार्मिक चाड-पर्व र लोकगीतमा पनि यसलाई प्रयोगमा ल्याइन्छ।

**कोंचा –खिं** तबला र बामको ध्वनि एउटै बाजाबाट निकाल्न हुने एक प्रकारको प्रख्यात बाजा। यो बाजाको एक छेउमा एउटा सानो प्वाल हुन्छ र त्यहीं प्वालमा बायाँ हातको माझी औंला घुसारी कोंचा खिं बजाइन्छ। विशेष गरेर यो बाजा ज्यापू र साल्मी जातले धार्मिक यात्रा तथा शुभ कार्यमा प्रयोग गर्छन्।

**दमो खिं**– प्रायः मृदंगकै आकार प्रकारको, यसको दुवै-तिरको मुख छालाले मोडिराखेको हुन्छ र मुखको केन्द्रमा गहुँको पीठो मुछेर टाँसीराखेका हुन्छ।

**धिमे**– नेवारी समाजमा ज्यास्तै प्रचलित बाजा। यो

सानो र ठूलो प्रकारमा हुन्छ । यसको दुवैतिरको मुख छालाले मोडि-राखेको हुन्छ । यो बाजाको दायाँ मुखमा घुंगुरिएको बेतको लट्ठी-द्वारा बायाँ मुखमा नांगो हत्केलाले हानेर बजाइन्छ । यो वाद्यलाई रणवाद्य पनि भनिन्छ । यो बाजाको आवाज चर्को र आकर्षक हुन्छ ।

धा:– यसको आकार प्राय: ढोलकसँग मिल्छ । यसको एकातिर नांगो हत्केला र अर्कोतिर एउटा छोटो लठ्ठीद्वारा बजाइन्छ । यो बाजा प्राय: गुँला अर्थात् श्रावण महीनामा बजाइने हुनाले यसलाई गुँला बाजाको नामकरण पनि गरिएको छ ।

नार्ख्रि– यो बाजा धा: बाजाभन्दा केही सानो र धा: बाजाकै आकार-प्रकारसँग मिल्छ । कसाही जातले बजाउने हुनाले यसलाई कसाही बाजा पनि भनिन्छ । नेवार जातमा कोही मर्दा लाशलाई मशानमा लैजाँदा यो बाजा बजाई लगिन्छ । यसको अतिरिक्त धार्मिक चाड-पर्वमा र राष्ट्रिय घोषणा तथा संदेश पनि प्राचीन कालमा यही बाजा बजाई नगर-परिक्रमा गरी सुनाउने चलन थियो । यो बाजा बजाई संदेश र घोषणा सुनाउने चलन ०७ साल-पछि मात्र लोप भएको हो ।

डमरु– यसमा पनि सानो र ठूलो भेद छ । यसको दुवै छेउ छालाले मोडिएको र बीच-भाग झिनो हुन्छ । यसको त्यही झिनो भागको दुईतिर टुप्पामा गाँठो भएका साना धागाका टुक्रा हुन्छन् । हातले घुमाउँदा धागोको डल्लो छालामा लागी बज्ने हुन्छ । यो बाजा नेवार-समाजमा धार्मिक चाड-पर्वमा र देवी-देवताको नित्यपूजामा पनि बजाइन्छ ।

द:– डम्फूकै आकार प्रकारसँग मिल्ने, ४।५ अंगुल जति चौडाइ भएको एक अंगुल जतिको बाक्लो काठ, बाँस अथवा धातुलाई गोल बनाई एकातिरको मुखलाई छालाले मोडिराखेको हुन्छ । पाँचै औंलाको प्रयोग गरी यसलाई बजाइन्छ ।

**भुस्या, छुस्या, ख्वालिमालि, ताः–** यी कयाली जातिका बाजाहरू हुन् । तर आकार-प्रकारमा विभिन्नता छ । यी बाजाहरूको दुई-दुई बटाको एक जोडी हुन्छ । भुस्याको आकार गोल हुन्छ र यसको बीच-भाग केही फुकेको हुन्छ । त्यही फुकेको ठाउँको बीच-भागमा एउटा सानो धागो हुन्छ र त्यही धागो समाती बजाइन्छ । छुस्याको गोलाइ एक बित्ता जतिको, ख्वालिमालीको गोलाइ ५ अंगुल जतिको र ताःको गोलाइ धेरै सानो हुन्छ ।

**पोंगा, काहा पँय्ता–** तीनै प्रकारका यी बाजाहरूलाई एकै जातमा लिन सकिन्छ । यी तीनै प्रकारका बाजाहरू तामाका लामा ढुङ्रा हुन् । यसको व्यास अन्दाजी २।३ अंगुल फुकेको गोल-मुख हुन्छ । पँय्ताको लमाइ अन्दाजी डेढ हात जतिको हुन्छ र पाँच-वटा टुक्राद्वारा बनेको हुनाले यसलाई जोड्न र छुटयाउन पनि हुन्छ । तर काहा धेरै लामो हुन्छ । काहा जात्रा-पर्व र मुर्दा मशानमा लैजाँदा पनि बजाइन्छ ।

**न्यकू बाजा–** यो आफ्नै प्रकारको विशेषता भएको बाजा हो । राँगोको सिंगले बनेको यो बाजालाई शाक्यभिक्षु र सालमी जातले धार्मिक चाड-पर्वमा प्रयोगमा ल्याइन्छ ।

**बाँसुरी–** काठ अथवा बाँसले बनाइएको ज्यादै प्रचलित बाजा । यो बाजा नेवारी समाजमा ज्यापूहरू कुण्डका कुण्ड मिली चाड-पर्व र धार्मिक यात्रामा बजाई हिंड्छन् ।

केही शब्दको अर्थ-विवेचना

## सामयिक भजन

श्री जयभास्कर मल्ल— काठमाडौंका मल्ल राजा, शासन काल ने. सं. ८१४–२२

गंगामाई— जलका देवी जसको आराधना रोपाइँताक गरिन्छ। गंगामाईको जात्रा दचौपाटनमा असारमा हुन्छ।

मंजुदेव— बौद्ध अनुश्रुतिअनुसार महाचीनबाट आएका एक बुद्ध, जसले वरदा र मोक्षदा साथ लिई कटुवाल डाँडालाई काटी काठमाडौं उपत्यकाबाट दहको रूपमा जमिरहेको पानी बाहिर निकालेका थिए। हिन्दू-मतानुसार यहाँको जल विष्णुले निकालेका र शक्तिका रूपमा लक्ष्मी र सरस्वती मानिएका छन्।

दुई देवी— वरदा, मोक्षदा अथवा लक्ष्मी र सरस्वती।

ज्योतिरूप— स्वयंभू भगवान्, अनुश्रुतिअनुसार कमलको फूलमा प्रकट भएको एक देदीप्यमान ज्योति।

चक्रवंश हंस– यस नागवास दहका पानी हाँस ।

नागवास दह–चारैतिर पहाडले घेरिएको काठमाडौ उपत्यकामा दहको रूपमा पानी जमिरहेको हुँदा विभिन्न नाग-हरूको वास भएको धारणा ।

कपोतल पर्वत– कटुवाल डाँडो, कच्छपाल पर्वत ।

चार शिर क्षिद्र ? (प्वाल) रंग–सालको सांकेतिक शब्द, ४६५ ? यस-लाई उल्टाउँदा ५६४, नेपाल संवत् । तर यसमा शब्द-अशुद्धिको अनुमान छ ।

श्री राजेन्द्रविक्रम शाह– शाह वंशका पाँचौं राजा, जसको पालामा भयंकर कोतपर्व भएको थियो, १५ सेप्टेम्बर १८४६ ई. को मध्यरात ।

काँचो बालक– बिफर नआएको, खोपाउनुपर्ने बालक ।

शीतलामाई– पशुपतिस्थित बिफरकी देवी । बिफरको खटिरामा पानी भरिदिने देवी ।

कछुला देवी– बिफर दिने देवी ।

किकिंपा– देवी-देवताको शिरमा रहने एक प्रकारको चाँदी अथवा सुनको चुचिलो पातलो पाताको रूपमा बनेको गहना ।

बछलामाई– बिफरकी देवी, जसको कोपबाट बिफर आएका केटाकेटीको मृत्यु हुने जनधारणा ।

श्री रणबहादुर– शाहवंशका तेस्रो राजा, स्वामी महाराज ।

थछचे– पाटन महालक्ष्मी स्थान ।

इखा भैरब– पाटन क्षेत्रको इखाटोलका एक भैरब ।

हिरिम्‌गिरि लुतावहाल– करुणामयको रथका पाँग्रामा रहने भैरवहरू, शुद्धरूप– हयग्रीव, लुप्तहास ।

त्याँगा– टोकाभैरव स्थानको नाम ।

आनन्दधारी लोकेश्वर–चोभारका करुणामय ।

पलिंगाल– पाटनक्षेत्रको एक स्थान ।
ह्नासपोता– शान्तभवनको (पाटन) पूर्व अवस्थित एक गणेश ।
लोहंगाल— शान्तभवनको पश्चिमस्थित एक स्थान ।
मचली– पचलीतिरको एक स्थान ।
बुद्धबारी– काठमाडौं ह्यु मततिरको एक बगैंचाको नाम ।
तब्बोक्व– काठमाडौं भीमसेनस्थानतिरको ओह्रालो ।
खुसिबहिल– विष्णुमतीपारिको एक बहिल ।
किंडोल– स्वयंभूको दक्षिणस्थित एक डाँडो ।
शाक्यसिंह– गौतम बुद्धको एक उपनाम ।
देताख्वाय— एक देवीको नाम ।
फस्को– हलचोकको दक्षिणस्थित एक स्थान ।
मण्डल चैत्य– चार प्रकारका चैत्यमध्ये एक ।
हलचोक– स्वयंभूपछाडि र इचंगुको बीचस्थित एक स्थान ।
महामंजुश्री– स्वयंभूको पश्चिमी डाँडोमा अवस्थित, हिन्दू मतानुसार एक देवी– सरस्वती, बौद्ध मतानुसार एक देवता ।
पुरानो स्वयंभू–स्वयंभू सरस्वतीस्थाननिरको एक चैत्य ।
स्वयंभूबहाल– स्वयंभूस्थित बहाल, एक स्थान ।
हारतीमाई– स्वयंभूस्थित केटाकेटीहरूको निम्ति संरक्षिका देवी ।
वसुन्धरापुर
वायुपुर
अग्निपुर
शान्तिपुर
नागपुर
— श्री शान्तिकर आचार्यद्वारा स्थापित स्वयंभू-अवस्थित प्रख्यात देवस्थलहरू ।
श्रीघल– श्रीघःविहार, काठमाडौं नघलटोलअवस्थित ।
ह्नोपी– एक प्रख्यात पीठ, बालाजुको बाटो विष्णुमतीको तटअवस्थित ।
जोगाम्बर– ह्नौपीस्थित एक देवता ।

विद्याधारी देवी– विजेश्वरी, विष्णुमतीपारि अवस्थित एक देवी ।
पोनेपा– पोडेपा, लैनचौरपछाडिको एक स्थान ।
सांख्व– सांखना, साकुना, नीलसरस्वतीस्थान, काठमाडौं ।
तोलन विष्णुदेवी– टुंडाल देवी, महाराजगंजपछाडि अवस्थित ।
आकाशब्रह्मायणी– विशालनगरस्थित एक प्रख्यात देवी ।
धन्यचैत्य– चाबहिलको प्रख्यात चैत्य ।
ग्वालमहाकाल– चाबहिलका एक भैरव ।
कामनिलंखु– कागनील थुसा (बाछो) एक देवता ।
गुथुलोहँत– एक देवताको नाम ।
कुतिबहाल– पाटन कोटेश्वरस्थित एक बहाल ।
सिकबहिल– पाटनक्षेत्रको एक बहिल ।
क्वाछें– पाटन बालकुमारीको एक स्थानको नाम ।
भंगिली– पाटनक्षेत्रको दुपाटटोलअवस्थित एक स्थान ।
गर्तेश्वर महादेव– भक्तपुरक्षेत्रको एक महादेव ।
जलहरि लोकेश्वर– भक्तपुरक्षेत्रस्थित एक करुणामय ।
दोलन्यामाई– एक देवी, पाटन लगनखेलस्थित ।
मतिको– पाटन लगनखेलनिरको एक स्थान ।
मतिको भैरव– वटुकभैरव पाटन लगनखेलअवस्थित ।
थछेंमाई– पाटन महालक्ष्मीको एक उपनाम ।

●

## सामयिक सामाजिक

प्रधान– संदेश लिई आउने राजाको मुख्य मानिस, प्रधान ।

दोरी– कपडाको कुनै जातविशेष ।

ब्याहृा– मर्नेको घरमा उसका नाता कुटुम्वले (नजीकका) दही, चिउरा, अदुवा आदि लिएर हेरविचार गर्न आउने नेवार जातिको एक प्रथा ।

छ्वासल– एक देवी स्थान, नेबारी समाजमा कुनै मर्दा उसको घरवाट मर्ने व्यक्तिको नामबाट कुचो, लुगाफाटो आदि छ्वासल देवी (छ्वास अजिमा)लाई चढाउने एक विशेष प्रथा ।

गुबाजु– मुर्दा पाल्ने महर्जनको एक जातका व्यक्तिलाई संबोधनार्थ शब्द ।

भीमराज– भीमसेनको उपनाम, विशेष गरी व्यापारीहरूले मान्ने गरेका देवता ।

मणिचूड राजा– बौद्ध अवदानमा उल्लिखित एक प्रख्यात राजा ।

प्रत्येक बुद्ध– ३ प्रकारका बुद्धमध्ये प्राप्त ज्ञान अरूमा व्यक्त गर्न नचाहने बुद्ध ।

भलभली अष्टमी– जेठ महीनाको अष्टमी ।

नव नाग– अनन्त, वासुकि, पद्म, महापद्म, तक्षक, कुलीर, कर्कट, शंख आदि प्रख्यात नागराजाहरू ।

भाजु– नेबारीमा पुरुष जातिको निम्ति प्रयोग गरिने आदरार्थी सम्बोधन शब्द ।

मय्जु– स्त्रीजातिको निम्ति विशेष गरी बालिका अथवा तरुणी अवस्थासम्म प्रयोग गरिने एक सम्बोधनार्थ शब्द ।

स्थानीय गणेश– आफ्नै टोल इलाकाको भनी मानिइआएका देवता ।

हरियो लगौंटी– सुनिन्छ, उस वेला कसै-कसैले हरियो लँगौटी आकर्षणको निम्ति लगाउँथे । कृषक जातिमा उस वेला सुरुवाल लगाउने चलन उत्तिको नभएको कारण हरियो लँगौटी टाढैबाट देखिन्थ्यो ।

पुष्प (स्वान) भुज मंगल– सालका सांकेतिक शब्दहरू– ५२८ । नेपाल संवत् ८२५ ।

देशकाल– वर्तमान समय ।

दुधनमाई– पुरानो गुह्येश्वरीको एक उपनाम (?)

फुलचोकीमाई– गोदावरीस्थित एक देवी ।

धेलाचोमाई– मच्छेनारायण स्थानका एक प्रसिद्ध देवी, चंपादेवी ।

मछिन्द्रनाथ– कामुनी क्षेत्रबाट ल्याइएका पाटनस्थित रातो मछिन्द्र-नाथ, करुणामय ।

राज्यप्रकाश मल्ल– बालचन्द्र शर्मा लिखित नेपालको ऐतिहासिक रूपरेखाअनुसार यिनको शासनकाल, १७४६ ई.देखि १७४९ ई.सम्म देखाइएको छ । तर यस गीतअनुसार नेपाल संवत् ८६०; १७४० ई. अथवा यसभन्दा पनि अघि देखिन्छ ।

कागजको चोलो– विशेष गरी हुलदंगा हुने घोडेजात्रा एवं वाला-चतुर्दशीको उपलक्ष्यमा हुने जात्रा आदिमा सम्मिलित हुने व्यक्तिले लुटिने सम्भावना देखी कागजको रंगीन अथवा बुट्टेदार टोपी लगाउँथे; त्यस्तै कागजको चोलो पनि भएको यसै गीतबाट देखिन्छ ।

शील– पञ्चशील, उपासना ।

श्री रणबहादुर शाह– स्वामी महाराज, शाहवंशका तृतीय राजा, निर्वाणानन्द ।

कोलखु दैव– पाटन क्षेत्रस्थित एक स्थान, क्वालखुका कुनै एक देवता ।

गोरखनाथ– मच्छिन्द्रनाथका एक चेला ।

नरेन्द्रदेव– आठौं शताब्दीका नेपालका एक राजा, जसले बन्धुदत्त आचार्यको साथ लिई रातो मछिन्द्रनाथ नेपालमा ल्याएका थिए ।

बन्धुदत्त आचार्य– काठमाडौंका एक प्रसिद्ध तान्त्रिक ।

कर्कोटक– एक नाग; जसलाई बन्धुदत्तले वशमा पारी आफ्नो साथ लगेका थिए ।

गरुजुजु– ठवहिलस्थित सिंह सार्थबाहुको एक उपनाम । एक प्रसिद्ध व्यापारी, पछि भगवान्को रूपमा मानिएका ।

लुति– शोभाभगवती विष्णुमतीवारिको इन्द्रायणीस्थान ।

फुसिंखेल– टोखाजाने बाटोनिरको एक स्थान ।

सपन्ती– काठमाडौंको उत्तर टोखावजारबाहिरको एक तीर्थ-स्थल ।

मनमय्जु– फुसिंखेलस्थित एक देवी इन्द्रायणी ।

मणिचूड दह– साँखु वज्रजोगिनीमाथिको एक दह ।

मणिलिंग– साँखुमाथिको एक तीर्थ स्थल ।
शंख दह– एक तीर्थ स्थल ।
ईदेश– ठिमीको एक स्थानको नाम ।
नमोबुद्ध– नम्रास्थित एक चैत्य, काभ्रे जिल्ला अवस्थित ।
महासत्त्व– प्रसूतिवेदनापीडित वाघलाई आफ्नू शरीरको मासु आफैंले काटी खुवाउने बौद्ध अवदानमा वर्णित एक धर्मात्मा राजा ।
फुलचोकीमाई– गोदावरीस्थित एक देवी ।
त्यांगा– चापागाउँ टीकाभैरवस्थान ।
बोडे– ठिमीवजारनजीकको स्थान ।
ववय्ना– चोभारमुनिको एक स्थान ।
तखुति– टंकेश्वर, बिष्णुमतीपारिको एक स्थान ।
खास्ती– बौद्ध, गुह्येश्वरीको पूर्वको एक स्थान ।
धर्मधातु– एक चैत्य अथवा मण्डलको उपनाम, ४ प्रकारका चैत्यमध्ये एक ।
आकाशजोगिनी– चार जोगीनीमध्ये एक ।
लुचुमाई– एक देवी, केलस्थित, जसको जात्रा वार्षिक गरिन्छ ।
लुमदी– टुंडिखेलको भद्रकाली देवी ।
श्री गीर्वाण महाराज– शाहवंशका चौथो राजा ।
दुइटा वेल– दुई स्तन
लाखारोटी– लाखामढी रोटी, विहामा वरको तर्फबाट दुलहीको घरमा दिई पठाउने एक प्रकारको ठूलो रोटी ।
(काम हरि दिगम्वर मुनि ?)– सालको सांकेतिक शब्द अथवा राजाको नाममध्ये कुनै एकमा भूल भएको अनुमान छ । प्रताप मल्ल पनि हुन सक्छ ।

सिलुतीर्थ– गोसाइँकुण्ड, जसको मेला दशहरा र जनैपूर्णिमाताक
लाग्छ, एक प्रसिद्ध धार्मिक कुण्ड ।

हादे– गीतको कुनै पंक्तिको प्रारंभमा सुर मिलाउन लिइने एक
प्रकारको अलाप ।

दुओर– दुलही भित्र्याउँदा मूलढोकामा राखिने एक प्रकारको शुभ-
सामग्री, कलशमाथि पालामा अक्षता, दक्षिणा र सिंगो
सुपारी राखिने वस्तु ।

त्वादेवा– तोरीको तेल हाली बाल्ने एक प्रकारको प्राचीन बत्ती ।

योमढी– चामलको पीठोबाट बनाइने रोटी, जसको भित्र चाकु तिल
राखिन्छ । नेवार-समाजमा बाफले बनाइने एक प्रकारको
विशेष रोटी ।

तुकी– आइमाईको कानमा लाउने एक प्रकारको सुनको बाक्लो
सानो चक्का चक्का हुने गहना ।

बडेजु– गहना बनाउने बाँडा जातका व्यक्तिलाई आदरसाथ संबोधन
गर्ने शब्द ।

| हरिसिद्धि, हयम्ग्रीव<br>लुतिकुनी, लुतावहा | चार भैरवसहित रहेका रथका चार पांग्राहरू, हरिसिद्धि, हयमुग्रीव, लुण्डी-कुण्डी, लुप्तहास । |
|---|---|

कामिनीक्षेत्र– भारतको आसाम राज्य, ब्रह्मपुत्र नदीको पूर्वीय भागमा
अवस्थित एक स्थान ।

चरण ? (चालन) ब्रह्माको
आनन शून्य चन्द्र– सालका सांकेतिक शब्द, तर यहाँ केही अस्पष्ट
छ र चालन नभई चरण हुनुपर्ने अनुमान छ,
यसअनुसार २४०१ यसलाई उल्टाउँदा
१०४२ नेपाल-संवत् ।

सुमश्रीविहार– पाटनस्थित एक प्रख्यात विहार, जहाँ करुणामयको
मूर्ति बनाइएको थियो, सुनय श्रीविहार ।

श्री त्रिभुवनवीरविक्रम– शाहवंशका आठौं राजा, ०७ सालका
जनक्रान्तिका एक अग्रनेता ।

श्री पृथिवीवीरविक्रम– शाहवंशका सातौं राजा ।

## सामान्य भजन

त्रिरत्न– बुद्ध धर्म संघको सांकेतिक शब्द ।

गिरिवर– श्रेष्ठ पर्वत ।

गोपुच्छ– स्वयंभू, जसलाई उत्तरबाट गोपुच्छ (गाईको पुच्छर) पूर्वबाट पद्मगिरि, दक्षिणबाट वज्रकूट र पश्चिमबाट हेरे गोश्रृंग याने गाईको सिंग जस्तो देखिने जनधारणा छ ।

धर्मधातु– स्वयंभू भगवान् ।

सुखावती– स्वर्गलोक, मुक्ति ।

नृत्यनाथ– महादेवको एक रूप, नाचगानको निंति एवं प्रख्यात एवं साक्षात् देवता, कुनै पनि नाचगानको निंति प्रारंभमा र अन्त्यमा मांस र मद्यसहित सिद्धि लिन र फर्काउन नृत्यनाथ (नासःद्यो)को पूजा गर्ने प्रथा छ।

पलेमा, चो, अस्तरा, जति– तालका प्रकारहरू ।

प्रथमभूमि– काठमाडौं उपत्यका, दहको रूपमा रहेको उस समयको खाल्डो ।

चन्द्रहास– मंजुश्रीको खड्ग ।

शान्तिकर– राजा प्रचण्डदेव, जो भिक्षु भएर शान्तिकर नामले प्रसिद्ध भए, स्वयंभूको विशाल चैत्यको निर्माण गर्ने आचार्य ।

श्री सुरेन्द्रविक्रम– शाहवंशका छैटौं राजा ।

स्वपुरुष– ईश्वर, आफ्नू आराध्य देवता ।

प्रताप मल्ल– काठमाडौंका एक प्रख्यात एवं विद्वान् मल्ल राजा । यिनका विभिन्न उपाधि छन्– कवीन्द्र आदि, शासनकाल नेपाल संवत् ७५९; ई० १६३९ ।

श्री महेन्द्रवीर– शाहवंशका नवौं राजा, पंचायतराज्यका संस्थापक तथा संगीत साहित्य कलाका अनुरागी ।

अमिताभ– पंच बुद्धमध्ये एक ।

ललितापुरी– ललितपुर, पाटन ।

रस-गज-रत्न– सालका सांकेतिक शब्दहरू- ६८९ नेपाल संवत् । यसलाई उल्टाएर निस्केको अंक ९८६ ।

फुलेल– सुगन्धित तरल द्रव्य ।

भूपालेन्द्र– काठमाडौंका मल्ल राजा, रानी ऋद्धिलक्ष्मी, शासनकाल नेपाल संवत् ८१२ ।

श्री रणजित मल्ल– भक्तपुरका अंतिम मल्ल राजा, सन् १७७१ मा बडामहाराज पृथिवीनारायण शाहको आक्रमण-पछि पराजित भएर काशीवास गएका ।

दाफा– भजनमण्डलहरूको प्राचीन नाम ।

गोसिंग पर्वत– स्वयंभू डाँडो ।

| धनभाजु, धनमय्जु<br>वासिभाजु, वासिमय्जु<br>जिलं भाजु | हारतीमाताका आफ्ना साथ राखिएका छोरा-छोरीहरू। |
|---|---|

नैर्ऋत्य– नैर्ऋत्य कोणको एक राक्षस, जसले लुम्बिनीवनमा बुद्धको आगमन हुँदा स्वागत गरेको धारणा छ ।

ज्ञानाकर– एक बानर ।

वाण ? (वन)-गज-रत्न– सालका सांकेतिक शब्दहरू– ५८९ । नेपाल संवत्, यसलाई उल्टाइँदा– ९८५ । वन नभई वाण हुनुपर्ने अनुमान छ ।

मनकामना देवी– एक प्रख्यात देवी, पश्चिम २ नम्बर, गोरखा ।

श्री पृथिवीनारायण शाह– बडामहाराज, शाहवंशका प्रथम राजा, विशाल नेपालका निर्माता एवं संस्थापक । शासनकाल १७६८-१७७५ ई० ।

श्रीमहीन्द्र मल्ल– एक प्रख्यात मल्ल राजा । जसले चाँदोको पहिलो टक चलाएका थिए ।

अभयानन्द– प्रधानमंत्री श्री भीमसेन थापाको भाइ, रणवीर थापा; जसले पछि सन्यास लिएका थिए ।

आरती– बत्ती चढाएर भजन विसर्जनको प्रार्थना ।

दशबल– बुद्धको दान, शील, क्षमा, वीर्य, प्रज्ञा आदि ।

पर्वत-सागर-रत्न– सालका सांकेतिक शब्दहरू, नेपाल संवत् ७४९ उल्टाइँदा ९४७ ।

## सामान्य सामाजिक

| | |
|---|---|
| इकंधलो<br>लुतिसल<br>घवन (धवँस्वाँ) | फूलका प्रकारहरू। |

पर्वत प्रसून– डाँडा-काँडामा फुल्ने फूलहरू।

तायो– केटीहरूले घाँटीमा लाउने एक प्रकारको प्राचीन गहना।

तुकी– कानमा लाउने सुनको प्राचीन गहनाविशेष।

बिजकनी– केटीहरूले खुट्टामा लाउने एक प्रकारको गहना।

धाल– धाःबाजा; एक किसिमका ढोलक।

तमचा– एक जात; जसले हातले सानो एक किसिमको बाजा वजाउँछ (?)

दोंचा– धाल (धाः बाजा) वजाउने एक जात।

छुकोंछाकीं– हातले बजाउने एक प्रकारको वाजा।

मुहालो– मुखले फुकेर बजाइने एक प्रकारको लाम्चो बाजा।

श्री पार्थिवेन्द्र मल्ल— काठमाडौंका मल्ल राजा, प्रताप मल्लका जेठा छोरा; शासनकाल ने. सं. ८००–८०४ ।

श्री भूपतीन्द्र मल्ल— भक्तपुरका एक मल्ल राजा। शासनकाल १६९६–१७२२ ई० ।

तेजलक्ष्मी— एक कुनै केटी ।

बापा— सेफको काम लिन हुने गरी पुरानो छाँटमा बनाइएको काठको एक प्रकारको बाकस ।

पिला— बेतले बुनेको, बाहिरपट्टि छालाले मोडेको फुलबान्कीको एक प्रकारको पुरानो बाकस ।

हेलम्बु— काठमाडौंको उत्तर-पूर्वअवस्थित एक पहाडी स्थान, रसुवा ।

## ख्याली

जोगनरेन्द्र– योगनरेन्द्र, पाटनका मल्ल राजा, यिनकी महारानी नरेन्द्रलक्ष्मी, शासनकाल ८०५ नेपाल संवत् ।

पार्थिवेन्द्र– काठमाडौंका एक मल्ल राजा, यिनकी महारानी राज्यलक्ष्मीदेवी, शासनकाल ८०० नेपाल संवत् । गीतको रचयिता अस्पष्ट ।

पूर्वीय दोरी– पूर्वीय देशका एक प्रकारका कपडा ।

लवंजिफो फूल– जपापुष्प ।

तुकिचा– कानमा लाउने गहना विशेष ।

स्वाक स्वान– रातो मखमली फूल (ग्वय्स्वाँ) लाई धागोमा उनी बनाइएको एक प्रकारको टुक्रे माला । यस्तो माला विशेष गरी देवी-देवताको अथवा उहिले विवाह गरी पठाइँदा केटीको निधार भरी यस्तो फूलको टुक्रे माला लगाइने प्रथा थियो । फर्मासको रूपमा केटीहरू पंखा फूललाई सिन्कामा उनी लगाउने चलन पनि छ । पंखा फूल एक प्रकारको सुवासिलो सेतो पहेंलो रंगमा हुने मौसमी फूल हो ।

धाप खेल– लगनखेलको दक्षिणतिरको एक स्थान ।

जयवागीश्वरी– एक प्रख्यात देवी, पशुपति देवपाटनस्थित ।

बज्रजोगिनी– एक प्रख्यात देवी, फर्पिङ्गस्थित; ४ जोगिनी-मध्ये एक

चँछिमी– कुनै एक केटी ।

शिपी भरुवा– शिपी भरेको अथवा जडेको ।

कतू– चर्खा काट्दा बेह्री रागेको धागोको डल्लो ।

वयृतू– बालयोनि ।

दलू– योनिको अथवा अर्कै आकारको वत्ती बाल्ने भाँडो ।

जधुन– पथिकहरूको निम्ति पानी भरेर राख्नुपर्ने ढुंगे-धारो; जसको पानी निस्कने प्वाल स्तनकै आकृतिको हुन्छ ।

फुलबोक्रा– हाँस अथवा कुखुरा आदिका फुलका खवटाहरू ।

तायो– घाँटीमा लाउने एक प्रकारको पुरानो छाँटको गहना ।

गुजरती– एक प्रकारको प्राचीन बाजा ।

पायो– एक प्रकारको पाउजेव पुरानो, छाँटको गहना ।

बिजकनी– केटीहरूले विशेष समयमा खुट्टामा लगाउने फुल-वान्कीको, चाँदीको चेप्टो एक प्रकारको प्राचीन शुभ कल्ली ।

भुलायो खास्टो– एक प्रकारको पुरानो समयको महँगो कपडा, अथवा खास्टो ।

अकबरी औंठी– अकबरी असर्फी राखी बनाइएको सुनको औंठी ।

साटन– एक प्रकारको रेशमी कपडा ।

मैंचा– निम्न जातका केटी अथवा आइमाईलाई संबोधन गरी बोलाउने शब्द ।

नाचिपोगा– योनि अथवा स्तनमध्ये कुनै एक ।

सुपारी खोस्नु– नेवार-समाजमा बिहाको जमान प्रायः सुपारी दिएर गरिन्छ, सुपारी खोसिए अथवा फर्काइए वैबाहिक संवन्ध विच्छेद गरिएको मानिन्छ ।

●

## बाल-गीत

| | |
|---|---|
| भित्ते द्यौता– | भित्तामा अडेस लगाई राख्नुपर्ने देवता, केटा-केटीलाई उठ्न लगाउन भित्तामा अडेस दिई भन्ने तरीका । |
| धाब्लाँ ख्याक– | जगल्टो फिजाएको कालो अथवा सेतो ख्याक । |
| चाकुमढी– | एक किसिमको रोटी । |

●

# सहायक-ग्रन्थ

आफ्नो खोज र अनुसन्धानको अतिरिक्त

१. मल्ल शाह कालया मे
२. बाखं मे
३. मतिनाया मे
४. राजेश्वरी
५. प्रसाद
६. ज्ञानमाला
७. हाम्रो लोक-संस्कृति
८. हाम्रो संस्कृति
९. धर्मोदय विशेषांक
१०. हाम्रो लोक-गीत
११. नासः द्योया मे
१२. पुलांगु मे प्रथम भाग
१३. पुलांगु मे द्वितीय भाग
१४. पुलांगु मे तृतीय भाग
१५. भजन सफू
१६. न्वाखँ पुचल
१७. महासत्त्व नाटक (हस्तलिखित)
१८. विभिन्न भजनका पुस्तक (हस्तलिखित)
१९. नेपालभाषा-शब्दकोश